# आश्रम गतिविधि

१-७: कार्तिक महिनामा काठमाडौंको बसुन्धरा आश्रममा सम्पन्न दिव्य गुरु महोत्सव।

८-१५: कार्तिक महिनामा काठमाण्डौ उपत्यकामा सम्पन्न विभिन्न मासिक हवनहरु।

● वर्ष १२ ● अङ्क ४ ● मङ्सीर २०६७ ● पूर्णाङ्क १३६

## सम्पर्क कार्यालयहरू


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी, फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट, फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल, फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौँ**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौँ**, सिमलटार
- **काठमाडौँ**, तीनकुने (मुनि भैरव)
- **ललितपुर**, गोदावरी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा प्रकाशित***

## नाथ विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ। परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो। आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ। यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ। यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन्। यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ। त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन्। त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो। प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ। विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ। यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ। साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ। साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ।

## आश्रमका नियमित कार्यक्रमहरू

प्रत्येक साँझ ५ बजे गुरु आरती। प्रत्येक बृहस्पतिबार बिहान १० बजे गुरु पूजन। प्रत्येक अंग्रेजी महिनाको २१ तारीख दिव्य गुरु महोत्सव कार्यक्रम। प्रत्येक महिनाको पहिलो सोमबार पशुपति मृगस्थलीस्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, पहिलो मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधबार लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन तथा पहिलो बिहीबार पाटन कुम्भेश्वरस्थित वगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम सञ्चालन। विभिन्न चाडपर्वहरूमा विशेष कार्यक्रम। गोरक्ष निखिल वाणी आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको प्रकाशन। विभिन्न एफ.एम. स्टेशनहरूमार्फत् गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम सञ्चालन। समाजमा आध्यात्मिक शिक्षा लागू गराउनका लागि गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको सञ्चालन। तान्त्रिक ध्यानका विभिन्न चरणका कक्षाहरू। समय समयमा विशेष साधना कार्यक्रमहरू। प्राणप्रतिष्ठित तान्त्रिक सामग्रीहरूको वितरण। समस्या समाधानका लागि परामर्श सेवा। असाध्य रोगका लागि तान्त्रिक हिलिङको व्यवस्था।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग
ssk.org.np, info@ssk.org.np

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौं।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, काठमाडौं, नेपाल**
**फोन नं: ०१-४३८९१५४, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

समयले धेरै ठूलो कोल्टो फेरेको छ। देश, काल, परिस्थिति आफ्नै रफ्तारमा अगाडि बढिरहेका छन्। समयलाई कसैले रोक्न सक्दैन। व्यक्तिले चाहेर नचाहेर समयकै अनुसार, निरीह भएर अगाडि बढ्नु बाहेक अरु विकल्प देखिँदैन। परब्रह्म परमात्माको यस सुन्दर सृष्टिभित्र हुर्किएका सम्पूर्ण जीव एवं जगत उहाँकै इशारामा अगाडि बढ्न बाध्य छन्। कारण, हामीले चाहेर अथवा सोचे जस्तो खोजेर पनि त्यस्तो स्थिति पाउन सक्दैनौं। के ठीक, के बेठीक, के सत्य, के असत्य यी आदि प्रश्नहरु समयले नै ल्याइदिन्छ। समयले नै उत्तर दिन्छ। त्यसैले सत्य स्वरुपमा अवस्थित परब्रह्म परमात्मालाई आधार मानेर, सत्यता र सद्गुरुलाई आधार मानेर अगाडि बढ्यौं भने पक्कै पनि उचित समयमा उचित निकास आउनेमा कुनै दुविधा रहने छैन।

गल्ती, कमी-कमजोरी प्रत्येक व्यक्तिबाट हुन सक्छ। मनुष्य जीवन नै गल्तीलाई प्रायश्चित गरेर अगाडि बढ्ने जीवन हो। योग र भोगलाई सन्तुलित बनाई अगाडि बढ्ने जीवन हो। अध्यात्ममा अगाडि बढ्नेहरु गल्तीलाई, भूललाई प्रायश्चित गरी, स्वीकार गरी सद्गुरुमा नै समर्पित भएर अगाडि बढ्यौं भने त्यो नै हाम्रो महानता हुनेछ। अध्यात्मभित्र फेरि राजनीति छिऱ्यो, आफ्नो अस्तित्वको लागि आन्तरिक द्वन्द्वमा सद्गुरुदेवहरुको योजनालाई क्षतविक्षत बनाउनेतिर लाग्यौं भने यो भन्दा ठूलो भूल कुनै हुने छैन। त्यसैले सानातिना गल्तीलाई सच्याएर आगामी दिनमा सही र सत्य शिष्यको परीक्षामा खरो उत्रने कोशिस गरौं। गुरु योजनाको लागि सहयोगी बनौं न कि विरोधी। परमपूज्य सद्गुरुदेवहरुसँग प्रार्थना गरौं कि विगतका कमी-कमजोरी, भूलहरुका लागि क्षमायाचना गर्दै आगामी दिनलाई स्वर्णिम बनाउन सकियोस्, यही आशीर्वाद प्राप्त होस् भनेर।

यसपालिको अंकलाई 'नाथ विशेष'को रुपमा निकाल्ने कोशिस गरेका छौं। नाथ गुरुको कृपा, आशीर्वादभित्र नै सारा जीवन, जगत सृष्टि अगाडि बढेको छ, नाथ गुरुलाई खुशी बनाउन सकेमा नै सम्पूर्ण प्राप्ति सम्भव छ। नाथहरुको लीलाभित्र नै सारा समाज अगाडि बढिरहेको छ। नाथहरुको तपस्याभित्र, उहाँहरुको अतुलनीय योगदानले नै गुरु-शिष्य परम्पराले जीवन्तता पाएको छ, अध्यात्मले समाजमा ठूलो फड्को मार्न सम्भव भएको छ। नाथ सम्प्रदायको विशिष्टता, उहाँहरुको दिव्यता, उच्चता हाम्रो चर्चाको वशभन्दा धेरै पर छ। नाथसम्बन्धी केही प्रसंगलाई जानकारीका लागि मात्र यहाँ चर्चा गरिएको छ। त्यसैले यसैलाई पूर्णता नठान्नुहोला। नाथ गुरुहरुको सधैँ कृपा, आशीर्वाद प्राप्त भइरहोस् भन्ने प्रार्थनासँगै उहाँहरुमा नै यस जानकारीलाई समर्पित गर्दछौं।

अन्तमा, यस अंकमा भए गरेका कमी-कमजोरी, न्यूनताहरुका लागि परमपूज्य सद्गुरुदेवहरुसमक्ष र यहाँहरुसमक्ष पनि क्षमायाचना गर्दछौं र यहाँहरुको सल्लाह सुझावको अपेक्षा गर्दछौं। अस्तु।

**परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज**

**परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ**

**मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ। गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ। सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ। यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ। गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–**

### परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

*वन्दे नारायणं देवं सद्गुरुं निखिलेश्वरं।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानव जीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ। आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३३ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो। वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो। आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यास जीवन बिताउनुभयो। त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो। संन्यास जीवनपश्चात् पुनः गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो। यसको लागि सयौं पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो। यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ **डा. नारायणदत्त श्रीमाली**को नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्गुरु आदिको संज्ञाले विभूषित हुनुभयो। आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो। हाल सद्गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ।

### श्री श्री महायोगी गुरु गोरखनाथ

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचरम्।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ। महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ। योग मार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो। यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ। गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ। श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ। विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौँ हजारौँ वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ। यसबारे विभिन्न विद्वान्हरूले थुप्रै अनुसन्धान गरेका छन्। आमाको कोखबाट नभई आवश्यकता अनुसार आफै प्रकट हुनुहुने महायोगी अजर अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ। उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नैपर्दछ। नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ। नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो। नेपालमा मात्र नभएर विश्वभर उहाँको सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन्। आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ।

# नाथ : शब्द चित्रण

संसारमा 'नाथ' शब्द नसुन्ने मानिस कोही पनि छैनन् होला । हामी दिनहुँ पशुपतिनाथ, मच्छिन्द्रनाथ वा मत्स्येन्द्रनाथ, गुरु गोरखनाथ, स्वयम्भूनाथ, बौद्धनाथ, बदरीनाथ, केदारनाथ आदि 'नाथ' शब्द झुण्डिएका शब्दहरू सुन्न अभ्यस्त भइसकेका छौँ । तर 'नाथ' शब्दभित्र निहित गूढतम् रहस्यहरू, यसका अर्थहरू, यसका परिभाषाहरूका बारेमा भने हामीलाई त्यति धेरै जानकारी नभएको हुन सक्छ । आउनुहोस्, 'नाथ'का बारेमा सत्यतथ्य केलाऔँ ।

**नाकारो नादि रुपं थकारः स्थाप्यत सदा ।**
**भुवनत्रय मेवैकः श्री गोरक्ष नमोस्तुते ॥**

अर्थात् अनादिकालदेखि स्थापित तीन भुवनका स्वामी अनादि अनन्तनाथ श्री गोरक्षलाई नाथ रूपमा नमन गर्दछु ।

नाथ शब्दलाई शब्द विन्यासबाट हेर्‍यौँ भने 'नाथ' र 'अच्'बाट बनेको पाइन्छ । यसको अर्थ स्वामी, प्रभु, रक्षक, मायाजेता, कामजेता तथा साम्प्रदायिक अर्थमा एक सिद्ध, जो शिव तत्त्वको प्रमुख मानिन्छ । सन्त कवीरले पनि नाथ शब्दलाई मायाजेता अर्थात् त्रिभुवनजयीको रूपमा उल्लेख गरेका छन्– 'नाथ सोई जो त्रिभुवन जती' ।

सामान्य अर्थमा उच्चस्तरको, आदरणीय, मान्नुपर्ने व्यक्तित्वको रूपमा नाथलाई लिइने गरिन्छ । यसैले जहाँ नाथ शब्दको प्रयोग छ, जहाँ यसको प्रसङ्ग आउँछ, त्यहाँ सम्माननीय व्यक्तित्वको परिचय प्राप्त हुन्छ, क्षमतावान् व्यक्तित्वको उच्चताको झलक प्राप्त हुन्छ ।

नाथ शब्दको शाब्दिक विश्लेषण यस्तो छ– ना (अनादि रूप) + थ (भुवनत्रयमा स्थापित हुनु) = नाथ । यसरी अनादिरूपबाट स्थापित धर्म, जसको कारणले भुवनत्रयको स्थितिको कारण निर्मित भएको छ, त्यही नै नाथ हो भनिएको छ । यसलाई राजगुह्यमा यसरी उल्लेख गरिएको पाइन्छ–

गोरक्षसिद्धान्त संग्रहमा नाथ पदको आशय ब्रह्मा, विष्णु, रुद्र, शिव, भैरव, श्रीकण्ठ, सदाशिव, ईश्वर, सृष्टिकर्ता, परमपद, गुरु, परमतत्त्वको अर्थमा प्रयोग गरिएको छ । यसबाट पनि नाथ शब्दले दिव्यता एवं परमपदको अर्थ बोकेको पाइन्छ ।

नाथ शब्द तथागतको रूपमा स्थिरचित्त सिद्धि प्राप्त योगीको पर्यायवाचीको रूपमा प्रयोग भएको पाइन्छ ।

नाथ सम्प्रदायका मूल प्रवर्तक अलख निरञ्जन, निराकार, निर्विकार, निरामय, निर्विकल्प एवं

अगम्य अगोचर भगवान् शिव गोरक्षको रहस्यमय लीलाभित्र सिर्जिएका समस्त ब्रह्माण्डको रचना एवं नाथसम्प्रदाय आफैमा रहस्यमय नै छ । सारा जीव जगत्को कल्याणार्थ कुनै बेला गुरु, कुनै बेला शिष्य, कहिले 'ज्योति'स्वरूप, कहिले 'ॐकार'स्वरूप, कहिले अंशरूप, कहिले निराकार निर्गुण रूप त कहिले सगुण साकार रूप, यस्ता रहस्यमयी महायोगी महानाथको बारेमा जान्नु बुझ्नु ऋषिमुनि, देवी देवताहरूको त वशको कुरा होइन भने साधारण मनुष्यले बुझ्ने त प्रश्नै उठ्दैन ।

हाम्रा प्राचीन शास्त्रहरू एवं धरोहरहरूमा उल्लिखित विभिन्न प्रसङ्गहरूले नाथ शब्द धेरै प्रचीन भएको कुराको पुष्टि हुन्छ । वैदिककालमा पनि नाथ शब्दको विभिन्न अर्थ लगाइएको पाइन्छ, साथै वेदमा पनि यस शब्दको उल्लेख भएको पाइन्छ । ऋग्वेदको दशम् मङ्गलको १३० औं सूक्तमा नाथ शब्द सृष्टिकर्ता, ज्ञाता र सृष्टिकारकका रूपमा प्रयुक्त भएको पाइन्छ जुन कुरा सिद्धनाथ संहितामा उल्लेख गरिएको छ ।

'शक्ति संगम तन्त्र'मा नाथ शब्दको व्याख्या गर्दै यसलाई यसरी परिभाषित गरिएको छ– 'ना' शब्दको अर्थ नादब्रह्म जुन मोक्ष दानप्रदायकको रूपमा दक्ष मानिएको छ भने 'थ'को अर्थ अज्ञानलाई विनष्ट गर्ने मानिएको छ । यसरी 'नाथ' शब्दलाई ब्रह्म साक्षात्कारको माध्यम एवं अज्ञानतालाई हटाई ज्ञान प्रदान गर्ने मानिएको पाइन्छ । ऋग्वेदमा 'नाथ' शब्द सृष्टिकर्ता, ज्ञाता एवं सृष्टिकारको रूपमा प्रयोग भएको पाइन्छ । संस्कृतिका भाष्यकार मुनिदत्तले नाथ शब्दलाई सद्‌गुरुको अर्थमा लिएका छन् । नाथ शब्दलाई बौद्धमार्गीहरू एवं जैन र वैष्णव ग्रन्थहरूमा पनि उच्च आदरका साथ लिइएको पाइन्छ । त्यस्तै नाथ सम्प्रदाय भगवान् आदिनाथबाट शुरु भएको र आदिनाथ स्वयं भगवान् शिव हुनु भएकोले पनि नाथ शब्दलाई शिवको पर्यायको रूपमा लिइएको छ ।

नाथ शब्द सिद्धमार्ग, योगमार्गको प्रतिनिधित्व गर्ने शब्द हो । अझै गहिरोसँग हेर्दा श्री गुरु शिव गोरक्षका दिव्यतम् वाणीहरूमा, उहाँका महाज्ञानहरूमा सिद्धान्तका व्याख्याका क्रममा स्वयंलाई 'नाथ' शब्दले संकेत गर्नु भएकोले यस शब्दको विशिष्टताको चर्चा असम्भव छ । सम्पूर्ण चराचर जगत्लाई आफ्नो योगबलले चलायमान गराउनु हुने भगवान् श्री शिव गोरक्ष, जो सम्पूर्ण नाथहरूमा श्रीनाथ, आदिनाथ आदि नामले चिनिए पनि नाथहरूमा उहाँ महानाथ हुनुहुन्छ ।

नाथ शब्द सिद्धहरूका लागि प्रयोग हुने गर्दछ । कुनै पनि साधक, योगी तब मात्र सिद्ध कहलाउन योग्य हुन्छ, जब उसले परम तत्त्वलाई बुझेको हुन्छ, शिव र शक्तिको सायुज्यतालाई बुझेको हुन्छ, सिद्धि र शक्तिलाई आत्मसात गरेको हुन्छ । यसैले जो व्यक्तिले आफ्नो देहलाई गुरुकृपा एवं साधनाले सिद्ध गराउन सक्छ, ऊ नै सिद्ध हुन्छ । त्यस्तै नाथ शब्दले मूलत: योगमार्गको प्रतिनिधित्व गर्ने भएकोले जो वास्तविक रूपमा योगी हुन्छ, त्यस्तो व्यक्ति नै नाथको लागि भागीदार हुन्छ । योग मार्ग नै त्यस्तो मार्ग हो जहाँबाट प्रत्येक साधक सिद्ध बन्न सक्दछ, योगी बन्न सक्दछ । परमात्मारूपी परब्रह्ममा लीन हुने प्रक्रिया नै योगमार्गको लक्ष्य हुन्छ । यो लक्ष्य प्राप्त भएको व्यक्ति नै नाथ हुन्छ । नाथयोगी सर्व निरपेक्ष परम तत्त्वलाई शिव मान्दछन् । सारा जगत्को भेद-अभेदभन्दा सर्वथा भिन्न भगवान् शिव स्वयं प्रकाश र चेतनाभन्दा सत्‌चित्‌आनन्द स्वरूपमा हुनुहुन्छ । उहाँकै शक्ति जगत्को नाम-रूपात्मक सत्ताको रूपमा अभिव्यक्त भएको छ । यसरी एउटै

***नाथ शब्दको शाब्दिक विश्लेषण यस्तो छ– ना (अनादि रूप) + थ (भुवनत्रयमा स्थापित हुनु) = नाथ । यसरी अनादिरूपबाट स्थापित धर्म, जसको कारणले भुवनत्रयको स्थितिको कारण निर्मित भएको छ, त्यही नै नाथ हो भनिएको छ ।***

तत्त्व आफ्नो शाश्वत एवं निरपेक्ष दशामा शिव हुन्छ भन्ने गत्यात्मक एवं सापेक्ष अवस्थामा शक्ति। मानवशरीरमा अवस्थित छन् शिव र शक्ति जसको योग नै साधकको लक्ष्य हो । साधकहरू योग, साधनाद्वारा मन, बुद्धि, इन्द्रिय एवं भौतिक शरीरका सीमाहरूलाई पार गरी परम तत्त्व शिवमा एकाकार हुन्छन् । यही शिवमा लय हुनेलाई नाथयोगी भनिन्छ। संसारमा रहेर पनि विषय-भोग, सांसारिक मायाजालबाट माथि उठ्ने व्यक्तिलाई नै नाथ भनी परिभाषित गरिएको पाइन्छ जसलाई गोरखवाणीमा यसरी उल्लेख गरिएको छ–

**हसिबा षेलिबा धरिबा ध्यान ।**<br>
**अहनिसि कथिवा ब्रह्म गियांन ॥**<br>
**हसै षेलै न करे मन भंग ।**<br>
**ते निहचल सदा नाथके संग ॥**

मनुष्य जीवनको सार्थकता भन्नु नै यसको उचित सदुपयोग गर्नु हो, न कि व्यर्थमा निष्फल गर्नु। सांसारिक राग-रङ तथा आनन्द-उत्सवहरूमा संलग्न हुँदै, रम्दै-रमाउँदै यी सम्पूर्णबाट माथि उठेर अनासक्त भई जीवात्माले परमात्माको ध्यान, चिन्तन र स्मरणमा निरन्तर लाग्दै ब्रह्मज्ञान, परमात्मा स्वरूपको मनन, विचार गरिरहनु पर्दछ। मनलाई वशमा राख्ने प्राणीलाई नै नाथ भनिन्छ। साथै परब्रह्म परमात्मासँगको सहज सम्बन्धबाट योगयुक्त रहने व्यक्ति नै योगी हो ।

यसरी नाथ भनेको सांसारिक प्रपञ्चहरूबाट माथि उठी सधैं ब्रह्मज्ञान प्राप्तिका लागि अविरल लागिरहने, मनलाई जित्ने, मनको स्वामी भनी स्पष्टरूपमा व्याख्या गरिएको छ । गुरु-शिष्य परम्पराको गौरवशाली परम्परामा विकसित हुँदै आएको ‘नाथसम्प्रदाय’भित्र ‘नाथ’ शब्द मात्रै प्रयोग भएमा महायोगी श्री गुरु गोरक्षलाई बुझिन्छ। त्यस्तै, आफ्ना गुरुले योग्य एवं सक्षम ठानेको खण्डमा कान चिरी ‘नाथ’ नामले विभूषित गरी नाथयोगीको दर्जामा राखिएको पाइन्छ ।

नाथको परिभाषालाई विदेशी लेखकहरूले ‘कान चिरी कुण्डल लगाएका व्यक्ति नाथ हुन्, साथै कानफट्टा योगीहरू नै नाथ हुन्छन्’ भनी उल्लेख गरेका पाइन्छन् । नाथसम्प्रदायको विकाससँगै नाथयोगीहरूमा जुन किसिमको नीति-नियम र अनुशासन हुनुपर्थ्यो, त्यसको अभावमा आजसम्म आइपुग्दा केवल नाथ भनेको कान छेडेर कुण्डल लगाएका व्यक्ति हुन् भन्ने संकुचित परिभाषा सर्वमान्य हुन पुगेको छ । कान छेडेर कुण्डल लगाएकै भरमा कुनै जोगी, योगी वा कुनै व्यक्ति वास्तविकरूपमा नाथ योगी हुन सक्दैन। नाथयोगी हुनलाई श्री गुरु गोरक्षप्रदत्त ज्ञान प्राप्त गरेको, उहाँले प्रारम्भ गर्नुभएका पद्धति, सिद्धान्तहरूलाई अङ्गीकार गरी अगाडि बढेको, कर्तव्यनिष्ठ, सच्चा गुरुभक्त, क्षमतावान् व्यक्ति हुनु आवश्यक छ । नाथयोगी हुन कुण्डल लगाउनेदेखि लिएर अन्य आफ्नै किसिमका नियमहरू छन्, पद्धतिहरू छन्, आफ्नै किसिमका विशिष्ट विधि-विधानहरू छन् ।

नाथ शब्दलाई विभिन्न रूपमा, विभिन्न किसिमले अर्थ लगाइएको पाइन्छ । गोरक्षदर्शनमा विजयपाल सिंहले यसबारे यसरी उल्लेख गरेका छन्–

***अनेकौं मार्गहरू, परम्पराहरू समाविष्ट सम्प्रदाय एवं पन्थ भएकोले र सम्पूर्ण देवताहरूलाई उपास्यको रूपमा लिने, योगमार्गलाई आत्मसात् गर्ने भएकोले नाथसम्प्रदाय सर्वग्राह्य छ ।***

'बौद्धधर्मको प्रसिद्ध मानिएको ग्रन्थ 'धम्मपद'अन्तर्गत नाथ शब्द स्वामी अथवा मालिक भन्ने अर्थमा प्रयोग भएको छ भने जैन धर्मअन्तर्गत दिगम्बरसम्प्रदायको साहित्यमा भगवान् महावीरको कुलको नामसमेत 'नाथ' वंशको रूपमा दिइएको पाइन्छ । कवीरले 'नाथ'को प्रयोग 'मायाजेता'को अर्थमा गरेका छन्, जसलाई त्रिभुवनका पति भनिएको छ । नाथलाई छोडी अन्य ब्रह्मा, विष्णु, रुद्र, देवता, नर सबै तथा अन्य पशुपक्षी आदि जीव मायाबाट ग्रसित, स्त्रीहरूद्वारा विजित हुन् । केवल एक नाथ मात्रै अविजित हो । यसैले 'नाथ'लाई मायालाई जित्ने मायाजेता भनिएको हो ।' गोरक्षनाथ सन्देशमा यसको बारेमा उल्लेख भएको छ ।

'नाथ' शब्द स्वामी, मालिकको रूपमा प्रयोग भएको पाइन्छ। कतैकतै पतिवाचकको रूपमा पनि यो शब्द रहेको सम्बन्धमा विभिन्न लेखकहरूले उल्लेख गरेका छन् । गौरीपति शिवलाई गौरीनाथ भनिएको छ भने प्रजापति ब्रह्मालाई प्रजानाथ भनिएको छ। रघुपति राघव राजा रामलाई रघुनाथ भनिन्छ । श्रीकृष्ण भगवान्लाई यदुनाथ भनिन्छ । प्राणपतिलाई प्राणनाथ भनिएको पाइन्छ । यसरी नाथ पन्थीहरूका ग्रन्थमा उल्लेख गरिएको नाथ शब्द विवेचनाबाट नाथ शब्द कुनै संकुचित रूपमा तथा उपाधिको रूपमा नभई ईश्वर, ब्रह्म, परम तत्त्व, परमात्माको रूपमा प्रयोग भएको पाइन्छ । भुवनत्रयमा परिव्याप्त 'नाथ' सर्वव्यापक, सर्वद्रष्टा एवं सर्वश्रेष्ठ छ । 'नाथ' अव्यक्त परब्रह्म शिवको साकार मूर्ति हो । नाथ शब्दलाई मोक्षदाताको रूपमा लिइएको छ । शक्ति संगम तन्त्रमा यसको बारेमा यसरी उल्लेख भएको छ–

**शक्ति जगत् कर्त्री शिवः पालकः ।**
**काल संहारक नाथो मुक्तिदायक ।।**

सृष्टि, स्थिति, लयको प्रक्रियामा शक्ति शिवको सृजना गर्दछिन्, शिव त्यसको परिपालन गर्दछन् र कालले त्यसको संहार गर्दछन् भने नाथले मुक्ति दिन्छन् । यसरी नाथको आश्रय लिएर योगीहरूले मुक्ति प्राप्त गर्दछन् ।

नाथ पन्थको आधिकारिक ग्रन्थको रूपमा लिइने गोरक्षसिद्धान्तसंग्रहमा नाथका तीन रूप मानिएका छन् जसअनुसार अद्वैत परिवर्ती नाथ प्राप्य देवता, निराकार ज्योतिरूप नाथ धेय र आदिगुरुको रूपमा साकार नाथ उपास्य छन् भनी यसप्रकार उल्लेख छ–

**अस्मिन मार्गे अद्वैतो परिवर्ती नाथो देवता प्राप्या निराकार ।**
**ज्योति नाथो धेयः साकार नाथ उपास्योऽथ च आदि गुरु ।।**

यसै सद्ग्रन्थमा योगीहरूका वास्तविक सिद्धान्तहरू उल्लेख भएका छन् । नाथपन्थीहरूलाई अन्य नामहरूले पनि सङ्केत गरिएको पाइन्छ, जसमा सिद्धान्त, सिद्धमार्ग, योगमार्ग, नाथमार्ग, योगसम्प्रदाय, अवधूतमार्ग, हठयोग आदि नामबाट लक्षित गरिएको छ । नाथपन्थमा हठयोग योगाभ्यासलाई मूलधर्म मानिएको छ । योगलाई मूल आधार मानी अगाडि बढ्ने भएकोले यसलाई योगमार्ग, योगसम्प्रदाय, हठयोगी भनी लक्षित गरिएको छ भने सिद्ध व्यक्ति नै योग्य, सक्षम हुने र नाथ भन्न लायक हुने भएकोले सिद्धमार्ग भनिएको छ । यसरी विभिन्न नामले सिङ्गो नाथपन्थलाई कानपट्टा, दर्शनी, गोरखनाथी, गोरखपन्थी, रावल आदि नाममा पनि विभिन्न विद्वान्हरूले व्याख्या गरेका छन् ।

जब कुनै व्यक्ति सद्गुरुको निर्देशनमा रही योगाभ्यास गर्दै अगाडि बढ्दछ, क्षमता एवं सामर्थ्य

*"बौद्धधर्मको प्रसिद्ध मानिएको ग्रन्थ "धम्मपद" अन्तर्गत नाथ शब्द स्वामी अथवा मालिक भन्ने अर्थमा प्रयोग भएको छ भने जैन धर्मअन्तर्गत दिगम्बरसम्प्रदायको साहित्यमा भगवान् महावीरको कुलको नामसमेत "नाथ" वंशको रूपमा दिइएको पाइन्छ।*

प्राप्त गर्दछ, तब उसलाई विशेष दीक्षा प्रदान गरी कान छेड्ने गरिन्छ र कुनै धातु, दाँत वा स्फटिकको कुण्डल लगाइन्छ। कुण्डललाई दर्शन पनि भनिने भएकोले कान छेडी कुण्डल लगाउनेहरूलाई दर्शनी साधु पनि भनिन्छ। दर्शनी शब्दको अर्थ मूल दर्शन हो। गोरक्ष दर्शनलाई आत्मसात् गर्नेहरूलाई दर्शनयोगी भनिन्छ। यो सारा संसार दर्शनकै भरमा चलेको छ। जसले मूल दर्शनलाई आफ्नो जीवनमा पालना गर्न सक्दछन्, तिनीहरू नै वास्तविक रूपमा योगी हुन्। शब्द ब्रह्मलाई बुझ्न सक्नेहरू, शब्दलाई पूर्ण रूपले पालना गर्नेहरू नै वास्तविक रूपमा नाथ हुन्।

नाथ शब्दलाई हाम्रो समाजमा विभिन्न रूपमा प्रयोग गरिएको पाइन्छ। कान छेडेका योगीहरूले एकापसमा 'नाथ'जी भनेर पनि सम्बोधन गरिएको पाइन्छ भने कैयौँ व्यक्तिहरूले प्रतिष्ठाको लागि पनि यो शब्दलाई आफ्नो नामको पछाडि राख्ने गरेका छन्। त्यस्तै कसैले आदरणीय, दिव्य शब्दको रूपमा यसलाई लिई अनुकरणीय कार्य होस् भन्नाका लागि पनि लिएका पाउछौँ।

यसरी 'नाथ'को शाब्दिक अर्थ खोज्दा, यस शब्दभित्र समेटिएको व्यापकताबारे चर्चा गर्दा, प्रयोग हुने अवस्था हेर्दा सम्पूर्ण रूपबाट नाथ शब्दको अर्थ परम पद, परमात्मा, ईश्वरकै स्वरूप रूपमा स्पष्ट हुन्छ। नाथ पन्थमा शिव र शक्तिको जुन रूपमा आदर, सम्मान र पूजन गरिन्छ, शिव र शक्तिको जुन सम्बन्ध पाइन्छ, यसबाट पनि नाथपन्थ अत्यन्तै पुरानो भएको स्पष्ट हुन्छ। अनेकौँ मार्गहरू, परम्पराहरू समाविष्ट सम्प्रदाय एवं पन्थ भएकोले र सम्पूर्ण देवताहरूलाई उपास्यको रूपमा लिने, योगमार्गलाई आत्मसात् गर्ने भएकोले नाथसम्प्रदाय सर्वग्राह्य छ। सम्पूर्ण धर्म, संघ, सम्प्रदाय समेटिने, सम्पूर्ण नै अट्न सक्ने भएकोले यसलाई कुनै जाति विशेष, सम्प्रदाय विशेषभन्दा पनि सर्वव्यापक सिद्धान्तको रूपमा लिइन्छ। सम्पूर्ण व्यक्तिहरूभन्दा माथि उठेर नाथयोगीहरूले सामाजिक विकासका लागि गरेको अतुलनीय योगदान, उनीहरूको मानवताका उच्च आदर्श एवं साधनात्मक उपलब्धिहरूका गूढतम् रहस्यहरूले पनि 'नाथ' शब्द आफैमा गर्वको पर्याय बनेको छ, विराटताको सूचक बनको छ। यसरी सबैका लागि स्वीकार्य यस शब्दसँग जोडिएका ती दिव्यतम् व्यक्तित्वहरू, जसले यस गौरवशाली परम्परालाई निरन्तरता दिँदै आइरहेका छन्, जसको कारण हाम्रो सनातन धर्म-संस्कृतिका अद्वितीय धरोहरहरू बनेका छन्, निश्चय पनि ती गर्वका कारण बनेका छन्। आजको यस परिस्थितिसम्म आइपुग्दा भने नाथ शब्द संकुचित अर्थको पर्याय बनेको छ। आजका मानिसहरूले नाथ शब्दको उच्चता, व्यापकता, वास्तविक मर्म नबुझी यस शब्दलाई दुरूपयोग गरिरहेको पाइन्छ। यस अवस्थाबाट माथि नाथको वास्तविक पहिचान हुनेतिर अगाडि बढ्ने बेला आइसकेको छ। जय गुरुदेव !

# नाथको पौराणिक प्रासंगिकता

तपःपुञ्ज परम कारुणिक महर्षि व्यासरचित अठाह्र पुराण तथा उपपुराणादि समग्र सार्वभौम आध्यात्मिक, सांस्कृतिक, धार्मिक तथा सामाजिक आदि जीवनदर्शनका जीवन्त भाष्य वा विश्वकोष हुन् । पुराणहरूमा हाम्रा सांस्कृतिक सम्पत्तिहरू सुरक्षित रहेका छन् । योगदर्शन मात्रै होइन, विशेष परिप्रेक्ष्यमा महायोगी शिवगोरक्ष गोरक्षनाथद्वारा संरक्षित शिवोपदिष्ट नाथयोगामृत र अनेकौं नाथसिद्धयोगीहरूको साधनामय जीवनका यत्रतत्र सहज यथावश्यक सन्दर्भहरूबाट व्यापकरूपमा पौराणिक प्रासंगिकता भरिएका पाइन्छन् । स्कन्दपुराणको काशीखण्ड, नारदपुराण, मार्कण्डेयपुराण, ब्रह्मवैवर्तपुराण, वायुपुराण, पद्मपुराण, श्रीमद्भागवतपुराण, ब्रह्माण्डपुराण आदिमा सिद्धयोगीहरूको र उहाँहरूको साधनापद्धति तथा योगको सामान्य उपादेयताको निरूपण यस तथ्यको संकेत हो कि यी पुराणहरूमा योग र सिद्धहरूको सम्बन्धमा अत्यन्तै उदार दृष्टिकोण परिलक्षित भएको छ ।

गोरक्षसिद्धान्तसंग्रह, ब्रह्माण्डपुराणको ललिताखण्ड, ललितापुरवर्णनमा योगमहाज्ञानचिन्तनमा तत्पर महायोगी गोरक्षनाथ र अनेक सिद्धसमूह, दिव्य ऋषिगण तथा प्राणयामपरायण योगीहरूको प्रसंग पाइन्छन् ।

ललितापुरको उत्तरकोणमा अत्यन्त प्रकाशमय वायुलोक छ । त्यस लोकमा वायुशरीरधारी, महान् दानी सिद्धसमूह, दिव्य ऋषिगण, प्राणायामका अभ्यासीहरू, अन्य योगी तथा योगपरायण, योगमहाज्ञानचिन्तनमा तत्पर श्रीगोरक्षनाथजी आदि अनेकानेक योगीहरूको समुदाय निवास गर्नुहुन्छ ।

श्रीमद्भागवतपुराण, वातरशना मुनिको सन्दर्भ, नाथसिद्धहरूको सम्बन्धमा यथेष्ट प्रकाश पारिएको छ । वातरशनाको यो परम्परा ऋग्वेद (१०।१३६) मा परिलक्षित छ जुन प्रणायामादि यौगिक क्रियाहरूमा प्रवृत्त कायादण्डन तथा निवृत्तिप्रधान जीवनयापनमा विश्वासी र आस्थावान् चित्रित गरिएको पाइन्छ । श्रीमद्भागवतमा भनिएको छ–

**कविर्हरिरन्तरिक्षः प्रबुद्धः पिप्पलायनः ।**
**आविर्होत्रोऽथ द्रुमिलश्चमसः करभाजनः ॥**
(५।४।११)

श्रीमद्भागवतमा वर्णित नवयोगेश्वर, नवनाथको मान्यतामा शिवगोरक्ष महायोगीको गणना गरिएको छैन । उहाँलाई त साक्षात् शिवको अवतार शिवस्वरूप भनिएको छ ।

आदिनाथ भगवान् महेश्वरले क्षीरसागरमा मणिप्रदीप्त सप्तशृंग पर्वतमा भगवती उमाप्रति महायोगज्ञानको वर्णन आरम्भ गर्नुभयो । भगवतीको निद्राभिभूत अवस्थामा मत्स्यको उदरबाट निस्केर मत्स्येन्द्रनाथले यो योगोपदेश सुन्नुभयो । उहाँले

देवीसहित महेश्वरलाई नमस्कार गरेर समस्त वृत्तान्तको वर्णन गर्नुभयो ।

**तं कल्पयामास सुतं शुभाङ्गे**
**सोत्सङ्ग आस्थाप्य चुचुम्ब वक्त्रम् ।**
**सुतो ममायं किल मत्स्यनाथो**
**विज्ञाततत्त्वोऽखिलसिद्धनाथः ॥**

(नारदपुराण उत्तर० ६९।२३)

संतयोगी ज्ञानेश्वरले नारदमुराणको यसै प्रासंगिक उद्धरणअनुरूप श्रीमद्भागद्गीताको टीकालाई ज्ञानेश्वरीको १८ औँ अध्यायमा यसरी वर्णन गर्नुभएको छ– क्षीरसमुद्रको तटमा श्रीशंकरले कहिले हो कुन्नि, एकपटक शक्ति-पार्वतीको कानमा जुन उपदेश दिनुभयो, त्यो क्षीरसमुद्रको लहरमा कुनै माछाको पेटमा गुप्त मत्स्येन्द्रनाथको हातमा पऱ्यो । अचलसमाधिको उपभोग गर्ने इच्छाले मत्स्येन्द्रनाथले गोरखनाथलाई उपदेश दिनुभयो ।

**क्षीरसिंधु परिसरीं । शक्तिच्या कर्णकुहरीं ।**
**नैणाके श्रीत्रिपुरारी । सांगितलेजे ।**
**ते क्षीरुकल्लोला आंतु । मकरोदरीं गुप्तु ।**
**होता तया चा हातु । पैहो जालें ।**
**मग समाधि अव्यत्ययां । भोगावीं वासना यया ।**
**ते मुद्रा श्रीगोरक्षराया । दिधलीं मीनीं ॥**

(ज्ञानेश्वरी, अध्याय १८)

अवधूत दत्तात्रेयको तपस्या, योग-साधना र जीवन वृत्तान्तको पर्याप्त वर्णन मार्कण्डेयपुराणका अनेकौं अध्यायहरूमा पाइन्छन् । श्रीमद्भागवद्को एकादश स्कन्धमा दत्तात्रेयको वर्णन उहाँको योग साधनाको परिचायक हो । श्रीमद्भागवद्मा दिष्टभुक्रूपमा उहाँको वर्णन पाइन्छ । उहाँको कथन पाइन्छ कि दिनमा रातमा जे प्राप्त हुन्छ, त्यसलाई मैले ग्रहण गर्दछु र दिष्टले जस्तो भोग गर्दछु, त्यसबाट सन्तुष्ट रहन्छु ।

**वसेऽन्यदपि सम्प्राप्तं दिष्टभुक् तुष्टधीरहम् ॥**

(७।१३।३९)

मार्कण्डेयपुराणको १७ र १९ औं अध्यायमा

दत्तात्रेयको सम्बन्धमा भनिएको छ कि उहाँ सती अनसूया र महर्षि अत्रिका पुत्ररत्नका रूपमा अवतरित हुनुभएको हो । उहाँले कावेरी नदीको तटमा तथा सह्मादिक्षेत्रमा तपस्या गर्नुभयो । मार्कण्डेयपुराणको ३९ औँ र ४१ औँ अध्यायमा उहाँले मदालसाका पुत्र अलर्कलाई योगोपदेशामृत प्रदान गर्नुभएको वर्णन पाइन्छ । उहाँको कथन छ–

**समाहितो ब्रह्मपरोऽप्रमादी**
**शुचिस्तथैकान्तरतिर्यतेन्द्रियः ।**
**समाप्नुयाद् योगमिमं महात्मा**
**विमुक्तिमाप्नोति ततः स्वयोगतः ॥**

मार्कण्डेयपुराण र श्रीमद्भागवतपुराणको प्रासंगिकताको परिप्रेक्ष्यमा सिद्ध अवधूतरूपमा वर्णित नाथसिद्ध दत्तात्रेयले शिवयोगी गोरखनाथलाई प्रणाम गर्नुभयो ।

निश्चय नै पौराणिक आख्यान र प्रासंगिकताहरूमा यथेष्टरूपमा उदारता र सर्वमङ्गलमयताको स्वर अक्षर-अक्षरमा अनुप्राणित भएको पाइन्छ ।

जय गुरुदेव !

# श्रीनवनाथस्तोत्रम्

नवनाथहरूको कृपा, आशीर्वाद सहज र सरलरूपबाट प्राप्त गर्नको लागि नवनाथ स्तोत्र आफैमा दिव्य स्तोत्र मानिन्छ । नौवटै नाथहरूको कृपा, आशीर्वाद एकैपटक प्राप्त गर्न सकिने यस स्तोत्रलाई दुर्लभ स्तोत्रको रूपमा लिइने गरिन्छ । प्रत्येक नवनाथहरूको लागि केही गर्न सकिएन भने पनि यस स्तोत्रको पाठ गरेर उहाँहरूको कृपा, आशिर्वाद प्राप्त गर्न सकिन्छ । सामान्य व्यक्तिहरूलाई दुर्लभ मानिने 'नवनाथस्तोत्रम्' अर्थसहित चर्चा गरिएको छ ।

**आदेशवस्तुविषयः सुरसिद्धलक्ष्यो**
**यश्चैकनाथ इह सन्नवमूर्ति-पूर्तिः ।**
**सर्वोपरि प्रतिपलं वरिवर्ति कुर्वे**
**कायेन तस्य मनसा वचसा प्रणामम् ॥**

जो आदेश वस्तुको विषय छ, त्यो सुर, नर, सिद्धहरूको लक्ष्य हो र एक मात्र नाथ ब्रह्म भएर नवनाथको नवमूर्तिहरूको पूर्ति भएको छ ।

एकोऽहं बहु स्यां प्रजायेय, यस्तो इच्छा शक्तिबाट नवनाथको रूपमा अवतरित भएर पनि जो सर्वदा सर्वोपरि वर्तमान छ, यस्ता श्रीनाथको मनसा वाचा कायेन प्रणाम आदेशको रूपमा नमन गर्दछु ।

**मोहान्धकारविचलन्मनसो मनुष्याः**
**स्वच्वोन्झितानपि परम्परयोपदेष्टुम् ।**
**तत्त्वं विमुक्तय उताकृत योगशास्त्र-**
**मादेश एतु मम तत्र य अदिनाथः ॥**

तत्त्वले वञ्चित, मोहान्धकारबाट विचलित मन भएका किंकर्तव्यविमूढ मनुष्यलाई पनि मुक्तिको लागि गुरु परम्पराबाट तत्त्वको उपदेश दिनको लागि योगशास्त्र बनाउने आदिनाथ भगवान्लाई मेरो ॐ नमो आदेशको प्रणाम बारम्बार पुगोस् ।

**यो ह्यादिनाथ उत राघवमत्स्जन्मा**
**मत्स्येन्द्रनाथ इति योगकभोगवृत्तिः ।**
**विस्मापयन्नखिलसिद्धसुरांश्च जात**
**आदेश एतु मम तत्र पवित्रमूर्तौ ॥**

भगवान् आदिनाथ नै स्वयं राघव मत्स्यबाट जन्मनुभएको हो । उहाँ नै अखिल सिद्ध एवं देव, दानव, मानवलाई विस्मित गर्दै योग र भोगवृत्ति हुनुभयो । यस्ता पवित्र पूर्ति अद्वितीय व्यक्तित्वमा मेरो ॐ नमो आदेश जाओस् ।

**यो ह्यादिनाथ उत भोगभरं विहाय**
**योगं सतत्त्वमुदय क्रमतो निनाय ।**
**नाम्ना श्रुतोऽस्त्युदयनाथ इति श्रित श्री**
**रादेश एतु मम तत्र पवित्रमूर्तौ ॥**

स्वयं आदिनाथ नै भोग भारलाई त्याग गरी क्रमशः सत्त्व योगको उदयमा लाग्नुभयो अर्थात् योगको उदय गर्नुभयो र उदयनाथको नामबाट विश्वप्रसिद्ध हुनुभयो । श्री लक्ष्मीले जसको आश्रय

लिनुहुन्छ, साथै अष्टसिद्धि, नवनिधिलाई जसले आश्रय दिनुहुन्छ, यस्ता पवित्र मूर्तिमा मेरो ॐ नमो आदेश सदैव पुगोस् ।

**यश्चाप्यनेकभवभूतगणान् कृपातः**
**पात्वातिपीडितहृदः किल कालदण्डात् ।**
**तद्दुर्लभामरपदं स सुखं निनाय**
**यद्दण्डनाथ इति सिद्धगणप्रसिद्धः ॥**

जो आदिकाल कालको दण्डको भयबाट अति पीडितलाई कृपा गर्नुहुन्छ, जो विशाल हृदय भएको हुनुहुन्छ, अनेक संसारका भूत प्राणीगणलाई सुरक्षित राखी दुर्लभ अमर पदसम्म सुखपूर्वक लैजाने हुनुहुन्छ, जो दण्डनाथको नामबाट सिद्धगण एवं गन्धर्व, साक्ष्य, यक्ष, किन्नर, आदित्य, विश्वदेव, वसु आदि देवगणमा प्रसिद्ध हुनुहुन्छ, उनै पवित्र मूर्तिमा मेरो ॐ नमो आदेश पुगोस् ।

**आत्मानमेव सकले य उपादिदेशा**
**त्मन्येव नित्य रमणं किल यस्य यस्मात् ।**
**सत्यप्रवाहक इतो नहि सत्यमन्यत्**
**सत्य स्वरूपइह यत् किल सत्यनाथः ॥**

जो आदिनाथ नै सत्यनाथको रूपमा सकल चराचरमा आत्माको नित्य रमण गर्ने एवं सम्पूर्णलाई आदेश एवं उपदेश गर्ने स्वात्माराम हुनुहुन्छ, 'नहि स्वात्मारामं विषय मृगतृष्णा भ्रमयति' अर्थात् जो सत्य प्रवाहक, संसारमा सत्यको सन्देशवाहक एवं सत्य व्यवहारको हुनुहुन्छ, जसभन्दा पर सत्य छैन, जो सत्यस्वरूप हुनुहुन्छ, यसैले सत्यनाथको नामबाट प्रसिद्ध हुनुहुन्छ, यस्ता पवित्र मूर्तिमा मेरो ॐ

नमो आदेश सदैव पुगोस् ।

**सत्यस्वरूपकतया सततं ह्यसंग**

**एकान्तिकोपि सततं स्वमुखे पराख्ये ।**

**सन्तोषमादधयं प्रससाद यस्मात्**

**सन्तोषनाथ इति गीयत ईड्यनामा ॥**

जो आदिनाथ नै सत्यनाथीय सत्य स्वरूप हुनाले सदा असङ्ग एवं एकान्तप्रिय, ऐकान्तिक भएर पनि परोख्य स्वसुखमा सन्तोष धारण गर्दै सदासर्वदा प्रसन्न रहनुहुन्छ, जसको महिमा सन्तोषनाथको नामबाट गाइन्छ, यस्ता पवित्र मूर्तिमा मेरो ॐ नमो आदेश सदैव पुगोस् ।

**कूर्माभिधानमुपलक्षणमादधानो**

**भूमीमधोभुवनमप्यवतीह यस्मात् ।**

**यः कूर्मनाथ इति शर्मकरो जनाना-**

**मादेश एतु मम तत्र पवित्रमूर्तौ ॥**

कूर्म नामको उपलक्षण धारण गर्दै सत्व पातालसहित भूमिको भार धारण गर्ने र सबै प्रकारका संरक्षण प्रदान गर्ने, समस्त जनतालाई सुख दिने र कूर्मनाथको नामबाट प्रसिद्ध हुनुभएका त्यस्ता पवित्र मूर्तिमा मेरो सदैव ॐ नमो आदेश पुगोस् ।

**पुण्यात्मनां विजयतां** (त्रिजगतां) **किल भुक्ति-मुक्ति**

**दाने पुनः परमतत्त्वनिदेशनाय**

**प्रावर्ततानुगुणयोगमयानुभूतिः**

**येनोत्तमा स च जलन्धरनाथनामा ।**

जो आदिनाथ भगवान् नै तीन लोकका विजयी पुण्यात्माहरूलाई भुक्ति मुक्ति दिनको लागि, पुनश्चः परम तत्त्वको उपदेश दिनको लागि प्रवृत्त हुनुभयो र अनुगुण योगमय उत्तम अनुभूति जसमा प्रवृत्त भएको छ, यस्ता व्यक्तित्व नै जालन्धरनाथको नामबाट प्रसिद्ध हुनुहुन्छ, यस्ता पवित्र मूर्तिमा मेरो ॐ नमो आदेश सदैव जाओस् ।

**सर्वे क्षयेण रहिता विहिताश्च येन**

**ये चेतना हि गुणरूपविलक्षणत्वात् ।**

**गोरक्षनाथ इति यः कथितोहि यस्मा-**

**दादेश एतु मम तत्र पवित्रमूर्तौ ॥**

जो आदिनाथ शिवले नै गुरु गोक्षनाथको रूपमा अवतरित भई सबै क्षयरोगी एवं मर्त्यधर्मा मरणशीलहरूलाई योगामृतबाट अजर-अमर गरिदिनुभयो, विलक्षण गुण रूपका धनी शिव गोरक्षले नै समस्त प्राणीहरूलाई आफूजस्तै विलक्षण गुण रूपयुक्त बनाउनु भयो र जड वस्तुलाई चेतना दिई चेतनयुक्त बनाउनुभयो, क्षय-प्रलय-कालबाट सबैको रक्षा गर्ने नवनाथ शिव नै गोरक्षनाथको रूपमा पूजित हुनुहुन्छ, यस्ता अद्वितीय पवित्र मूर्तिमा मेरो ॐ नमो आदेश सदैव पुगोस् ।

**नवनाथनुर्ति सततं रचिरां, पठतिह जनः परमादरतः ।**

**पतिोषमुपेत्य स नाथ इतः प्रददाति मनोरथमात्मसुखम् ॥**

जो व्यक्ति यस सुन्दर-रुचि र नवनाथ स्तुतिको परम आदरले निरन्तर पाठ गर्दछन्, उनीहरूबाट नवनाथ प्रसन्न भई उनीहरूको मनोरथ पूर्ण गर्दै उनीहरूलाई आत्मसुख प्रदान गर्नुहुन्छ ।

**॥ इति श्रीनवनाथस्तोत्रम् ॥**

# स्वयं उत्पन्न नाथ

# स्वयम्भूनाथ

काठमाडौंको पश्चिमपट्टि रहेको मनोरम थुम्के डाँडामा अवस्थित स्वयम्भूनाथ अति नै प्राचीन चैत्य हो । स्वत: निर्मित मानिएको यस चैत्यको आँखाको बीचमा नाकको आकृति कोरिएको छ । स्वयम्भूनाथलाई नेवारीमा सिंगु भनिन्छ ।

## आदिबुद्ध स्वयम्भू ज्योतिरुपको स्वरुप

अघि यो उपत्यका नागवास नामक ठूलो वर्तुलाकार तालको रूपमा थियो । त्यहाँ विपश्वी बुद्धले कमलको बीज रोपे । कालान्तरमा विशाल कमल उम्रियो, जहाँ ज्योतिरूप स्वयम्भूको रूपमा आदिबुद्धको प्रादुर्भाव भयो, जसको दर्शन गर्न अनेक मानुषी बुद्धहरू यहाँ आए । महाचीन देशको पञ्चशीर्ष पर्वतमा निवास गर्ने बोधिसत्व मञ्जुश्रीले त्यहीँ बसी दैवी शक्तिको बलमा ध्यान लगाउँदा नागवासमा ज्योतिरूप स्वयम्भूको उत्पत्ति भएको थाहा पाएर त्यहीँ जाने विचार गरे । आफ्ना देशका कृषक, भिक्षु र राजा धर्माकार र दुई पत्नी (देवी) हरू समेत अनेक शिष्यहरूको साथमा मञ्जुश्री नागवास आएर स्वयम्भूको पूजा र परिक्रमा गरे । दोस्रो परिक्रमाको सन्दर्भमा मञ्जुश्रीले दक्षिण दिशाको पहाडमा पुग्दा त्यसैलाई पानीको निकासको लागि बढी उपयुक्त ठानी आफ्नो तरबारले त्यसलाई काटे । परिणामस्वरूप पानीको निकास बन्यो र ताल सुक्दै गयो । त्यसपछि तिनी उपत्यकाका विभिन्न स्थानमा घुम्न लागे । गुह्येश्वरीमा पुग्दा तिनले जोरसँग पानीका फोका उठिरहेको देखे र त्यसलाई रोक्ने प्रयास गर्दा प्रज्ञास्वरूप गुह्येश्वरीको दर्शन भयो । उनले जलरहित

*करिब ७७ वर्षअघि लिइएको स्वयम्भूनाथको तस्वीर*

***महाचीन देशको पञ्चशीर्ष पर्वतमा निवास गर्ने बोधिसत्व मञ्जुश्रीले त्यहीँ बसी दैवी शक्तिको बलमा ध्यान लगाउँदा नागवासमा ज्योतिरूप स्वयम्भूको उत्पत्ति भएको कुरा थाहा पाएर त्यहीँजाने विचार गरे । आफ्ना देशका कृषक, भिक्षु, राजा धर्माकार र दुई पत्नी (देवी) हरू समेत अनेक शिष्यहरूको साथमा मञ्जुश्री नागवास आएर स्वयम्भूको पूजा र परिक्रमा गरे ।***

उपत्यकाको नामकरण नेपाल (अर्थात् ने-स्वर्गतिर पठाउने, स्वयम्भू र तिनद्वारा पालित क्षेत्र) भनी गरे । उनले स्वयम्भू र गुह्येश्वरीको बीचमा ठूलो बस्ती बसाले जसको नाम मञ्जुपत्तन अर्थात् 'मञ्जुश्रीद्वारा निर्मित नगर' वा 'सुन्दर नगर' भनी राखे । त्यहाँ आफूसँग आएका शिष्यहरूलाई आवाद गरी तथा धर्माकरलाई राजा थापी उनी स्वदेश फर्के ।'[१]

तर ड्यानियल राइट वंशावलीमा प्रस्तुत कथा अलि फरक छ–

बोधिसत्व मञ्जुश्री आएर (भादगाउँबाट १ मील टाढास्थित) महामण्डपमा तीन रातसम्म बसे र स्वयम्भूज्योतिको दर्शन गरे । नागदह (नागवास) बाट पानीको निकास बनाउन उनले फुलोच्च र ध्यानोच्च नामक पहाडमा बरदा र मोक्षदा नामक दुई देवीहरूको स्थापना गरे र बीचमा स्वयं बसे । त्यसपछि उनले कोतवाल (चोभार) को पहाड काटे । त्यहाँ बस्ने अनेकौं नाग र जलचर पानीका साथ बाहिर बग्न लागे । तर मञ्जुश्रीले नागराज कर्कोटकलाई उपत्यकाको सम्पूर्ण धन-सम्पत्तिको जिम्मा दिई मेष संक्रान्ति (वैशाख) को दिन (हाल टौदह नामले प्रसिद्ध) तलाउमा बस्न बनाए । तिनले कार्तिक पूर्णिमामा स्वयम्भूको विश्वरूपको दर्शन पाए । यसैगरी पौषकृष्ण नवमीमा उनले स्वयम्भूको कमलको जरो गुह्येश्वरीमा भएको तथ्य पनि जाने । तिनले पद्मा पहाड (स्वयम्भू पर्वत) को निर्माण गरे । यस ठाउँबाट गुह्येश्वरीसम्म

मञ्जुपत्तन नामक नगर बसाए, रूख रोपे र नगरमा आफूसँग आएका धर्माकरलाई त्यहाँका राजा बनाए र अन्य शिष्यहरूलाई त्यहाँ आवाद गरे । भिक्षुका रूपमा बस्न चाहने शिष्यहरूको निम्ति उनले एक विहार बनाइदिए । अन्तमा उनी स्वदेश फर्के ।[२]

भाषा वंशावलीमा स्वयम्भूनाथ उत्पत्ति सम्बन्धमा संक्षिप्त रूपमा लेखिएको छ–

*'...महेन्द्रदमनले... बाग्मतीकन थुनी... जलपूर्ण गरी राख्दा समय एक कमल उत्पन्न भै स्वयम्भू स्थानमा स्पर्श गर्न जाँदा पद्मगिरि भनी सबै देवताहरू स्वयम्भू क्षेत्रमा आउँदा भया...'*

स्वयम्भूको उत्पत्ति हुनुअघि यहाँको यात्रा गर्ने प्रथम व्यक्तित्व मानुषी बुद्ध विपश्वी थिए । मञ्जुश्रीको आगमन हुनु पूर्व दुईजना अन्य मानुषी बुद्धहरू र पछि फेरि अन्य चार मानुषी बुद्धहरूको आगमन कथा पाइन्छ । राइटको वंशावलीमा दोस्रा मानुषी बुद्ध शिखी बुद्धको आगमनको विवरण पाइन्छ । यिनले एक पर्वतमा बसी स्वयम्भू ज्योतिको दर्शन र ध्यान गरेपछि उनले भविष्यवाणी गरे । अन्तमा मेष (बैशाख) सङ्क्रान्तिका दिन स्वयंलाई त्यस ज्योतिमा लीन गराए । त्यसै दिनदेखि न्यो पर्वत ध्यानोच्च (चन्द्रागिरिको पूर्व चम्पादेवी) भनिन लाग्यो । त्यसै दिनदेखि नै मेला लाग्न पनि शुरु भयो ।

स्वयम्भू पुराणमा भने शिष्यहरूसँग आफ्नो निर्वाणको बेला आएको भन्दै उनीहरूलाई स्वदेश फर्कने सल्लाह दिएर शिखी बुद्धले भने नागवासमा फाल हाली स्वयम्भूमा लीन भएको प्रसंग पाइन्छ । केही शिष्यहरूले उनको अनुशरण गरे भने केही शिष्यहरू स्वदेश फर्के । विश्वभू बुद्ध, क्रकुच्छन्द बुद्ध, कनकमुनि, काश्यप, शाक्यसिंहजस्ता तथागतहरूको

आख्यानले नेपालको बौद्ध समाजमा निकै प्रभाव पारेको पाइन्छ । यी आख्यानहरूमा बौद्ध समाजमा गहिरो आस्था र निष्ठा रहेको पाइन्छ । उपत्यकाका विभिन्न स्थानहरूको नामकरण यसै कथाका आधारमा गरिएका छन् । फुलोच्च, ध्यानोच्च, केशावती (विष्णुमति), नमोबुद्ध चैत्य पर्वत (भक्तपुरको पूर्व) र जातमन्त्रोच्य (नागार्जुन) विशेष प्रसिद्ध छन् ।

**स्वयम्भू अमूर्त रुपमा**

स्वयम्भू पुराणअनुसार आदिबुद्ध स्वयम्भू भगवान् ज्योतिरूपमा, प्रकाशपुञ्जको रूपमा नेपालमा प्रकट हुनुभएको थियो । त्यही ज्योतिलाई छोपी स्वयम्भू महाचैत्य बनाइएको हो । भगवान् शाक्यमुनि बुद्धले अरू कसैसँग नसुनेको धर्मलाई स्वयं आफैले अनुसन्धान, खोज, अनुभव गरी पत्ता लगाउनुभयो । 'स्वयं'=आफैले, 'भू'=पत्ता लगाउनुभयो, अनुभवज्ञान गर्नुभयो । त्यसैले अरू कसैसँग सोधेर, सिकेर, सुनेर होइन, स्वयंले अनुभव गरेर पत्ता लगाएको बोधिज्ञानलाई नै स्वयम्भू भनिएको हो । स्वयम्भू ज्ञानको स्वरूप भएकोले यसको मूर्तरूप हुँदैन । त्यसैले यसको स्वरूपलाई उज्ज्वल ज्योतिरूपको रूपमा अर्थात् ज्ञानको ज्योतिको रूपमा लिइएको हुन सक्छ । स्वयम्भूलाई आदिबुद्ध पनि भनिएको छ । आदिबुद्धलाई वज्रयानमा तथागतगर्भ (बुद्ध नेचर) पनि भनिन्छ । जो कोही पनि मनमा प्रज्ञाको प्रदीप बाली सम्यक सम्बुद्ध बन्न सक्छ । त्यसैले, प्राणीहरूको मानसपटलमा तथागतगर्भ लुकेको छ भनिन्छ । त्यही तथागतगर्भ आदि बुद्धलाई धर्मज्ञातु ज्ञान पनि भनिन्छ । यसको स्वरूपलाई ज्योतिरूप, उज्ज्वल प्रभाश्वर (clear light) को रूपमा वर्णन गरिएको छ । नेपालमा दीपङ्कर बुद्धलाई पनि आदिबुद्धको रूपमा लिइन्छ । दीपङ्करको 'दीप' शब्दले ज्योति प्रदीपलाई नै संकेत गर्दछ भन्ने कुरा पनि उल्लेख भएको पाइन्छ । स्वयंभू ज्योतिरूपलाई छोपी स्तुप र चैत्य बनाइएकोले चैत्यलाई आदिबुद्धको स्वरूप मानिन्छ ।[३]

महामञ्जुश्रीबाट दीक्षा पाएका प्रचण्डदेव (पछि शक्तिकर) ले स्वयम्भू चैत्यको निर्माण गरेका हुन् भन्ने स्वयम्भू पुराणमा उल्लेख भएको पाइन्छ । मानदेवले यस चैत्यको निर्माण गराएको भन्ने कुरामा धेरै विद्वान्हरू एकमत देखिन्छन् । सातौँ शताब्दीको चाबहिलको शिलालेखमा यस चैत्यको बारेमा उल्लेख भएको पाइन्छ । तेह्रौँ शताब्दीमा तिब्बती बौद्ध लामाले स्वयम्भू चैत्यको गजुर बनाउन सुन पठाएका हुन् भनिन्छ । राजा ज्योतिर्मल्लको समय चौधौँ शताब्दीमा स्वयम्भूको पूर्णरूपमा जीर्णोद्धार मर्मत भएको हो । यसका लागि तिब्बतबाट पनि यथेष्टरूपमा आर्थिक सहयोग प्राप्त भएको ऐतिहासिक तथ्य पाइन्छ । काठमाडौँका शक्तिशाली राजा प्रताप मल्लले १६ औँ शताब्दीमा यहाँ पूर्वतिरबाट भऱ्याङ्ग बनाउन लगाएका थिए । उनले चैत्यको दायाँबायाँ अनन्तपुर र प्रतापपुर नामक शिखर शैलीका दुई सुन्द र मन्दिरहरू बनाएका थिए । चैत्यको जीर्णोद्धार लिच्छविकाल र मल्लकालमा पनि भएका थिए । त्यतिबेला संचालन र पूजाका लागि गुठीको रूपमा प्रशस्त जग्गा जमीन राखिदिएका थिए ।

*सन्दर्भग्रन्थ : १.नेपालको पौराणिक इतिहास, पाण्डे र रेग्मी, २. पूर्ववत्, ३. मतया : स्मारिका, न्युकूजात्रा मतया : संचालन समिति, यल, ने.स. ११३०) र तीर्थ पर्यटन, युवराज शर्मा गौतम ।*

## गुँला महिनाको महिमा

स्वयम्भू महापुराणअनुसार ज्योतिस्वरूप श्री स्वयम्भू महाचैत्यलाई सर्वोपरि स्थान दिन केन्द्रीय श्रद्धा भाव गर्न विशेष पुण्यतिथि गुलाँ महिनाको व्यवस्था भएको पाइन्छ । श्रृङ्गभेरी जातकअनुसार प्राचीनकालमा सिँहकेतु राजाले चैत्यमा श्रद्धाभक्ति गरेको फलस्वरूप उद्धार भएको दिन यही गुँला महिना पर्दछ । त्यस्तै, राजा सर्वानन्दले श्री दीपंकर तथागतलाई आह्वान गरी सम्यक महोत्सव आयोजना गरेको गुँलाअन्तर्गत परेको कुरा सर्वानन्द जातकमा उल्लेख भएको छ । ललितविस्तारअनुसार सर्वाद्धसिद्ध राजकुमारले असङ्ख्य मारगणलाई जितेर सम्यक सम्बुद्धत्व प्राप्त गरेको पवित्र दिन पनि यही गुँला महिना पर्दछ । नेपाललाई जलवृष्टिबाट बचाउने उद्देश्यले गुँला महिनामा नागदेवताको पूजा गर्ने प्रचलन छ । अशोकावदान ग्रन्थका अनुसार चतुर्भुजअन्तर्गत सत्य, त्रेता, द्वापर र कलियुगमध्ये कलियुगको दोष निवारण गर्नका लागि सकेसम्म पुण्य अभिवृद्धि गरी सौभाग्य लाभको निमित्त गुँला धर्मकर्म गर्ने उपयुक्त साउन महिना रहेको उल्लेख छ ।

# शब्दको प्रचण्ड शक्तिसँग परिचित हुनुहोस्

प्राचीनकालका ऋषि, मुनि, वैज्ञानिक र तत्त्ववेत्ताहरूलाई स्वर विज्ञानको राम्रो अनुभव थियो। उनीहरूले एक एक स्वरको धेरै खोज, अनुसन्धान गरेका थिए। यस अनुसन्धानमा नादब्रह्म अर्थात् ॐ (ओऽम) शब्द प्रमुख रूपमा रहेको छ। यस शब्दको ठूलो आध्यात्मिक अर्थ रहेको छ। प्रत्येक हिन्दुले कुनै न कुनै रूपमा यस शब्दको दैनिक पूजा, आराधना वा यसलाई दैनिक जीवनमा प्रयोग गर्छन्।

'ओऽम' शक्ति, सामर्थ्य र ईश्वरीय सम्प्रदायको रूप हो। एकपटक असुरहरूले इन्द्रपुरीलाई घेरे। इन्द्रलाई आफ्नो इन्द्रपुरी नै छिनिने डर भयो। कुनै बाह्य दैवी शक्तिको सहायता लिने सम्बन्धमा इन्द्र सोच्न बाध्य भए। आफ्नो सीमिम शक्तिका साथ असुर हरूसँग लडेर इन्द्रपुरीको रक्षा नहुने देखे उनले। असुरहरूलाई कसरी मार्ने भनेर उनी घोत्लिन थाले। उनले उपाय भेट्टाए– ॐ।

इन्द्रले भने– हे शक्तिरूप ! हामी हजूरलाई प्रमुख बनाएर असुरहरूलाई जित्न चाहन्छौँ। हजूर ईश्वरका शक्ति र सामर्थ्यरूप हुनुहुन्छ। हजूरको सहायताबाट हामी देवताहरूमा नवीन शक्ति र स्फूर्ति आउनेछ। हजूरसँग रहनाले हामीमा साहसको प्रादुर्भाव हुनेछ। हे देवशक्ति सम्पन्न महात्मन् ! हाम्रो रक्षा गर्नुहोस्।

यो निश्चय थियो कि उहाँको अध्यक्षतामा देवताहरूले सुरहरूलाई जित्न सक्छन्। देवताहरू सबै ऋद्धि सिद्धिका पुन्ज थिए। देवताहरूले ओमसँग अनुपम विनय गरिहेका थिए।

ओमले एउटा शर्तमा आफूले सहायता गर्ने कबुल गर्नुभयो।

ओमले भन्नुभयो– यस शर्तमा म तपाईंहरूको सहायता गर्न तत्पर छु– म अर्थात् ओमलाई नपढीकन ब्राह्मणले वेदोच्चारण नगरुन्। मेरो नामको उच्चारण सबैभन्दा पहिले गरियोस्। यदि कसैले मेरो नाम नलिइकन वेद पाठ गर्छन् भने त्यो देवताहरूलाई स्वीकार्य नहोस्।

देवताहरूले शर्त मञ्जुर गरे।

ओमले देवताहरूको सैन्य संचालन गर्नुभयो। सम्पूर्ण देवसेनाहरूसँग उहाँले भन्नुभयो– देवताहरू हो ! मेरो नाम लिएर अगाडि बढ्नुहोस्। विजय तपाईंहरूको हुनेछ।

देवताहरू 'ओम ओम' उच्चारण गर्दै युद्ध गर्दै रहे। आश्चर्य ! त्यस शब्दको शक्तिबाट उनीहरूमा नयाँ उत्साह र प्रेरणा उत्पन्न भयो। नवीन शक्तिको अभ्युदय भयो। जब जब उनीहरू ओमको उच्चारण गर्दथे, तब तब थाकिएका सैनिकहरूमा नयाँ तागत आउँथ्यो। त्यस शब्दको चमत्कार संजीवनीजस्तो थियो।

ओमको सहायताबाट असुरहरू हारे।

त्यसबेलादेखि ओम अमर हुनुभयो। थाकिएको, हारेको, निराश, उत्साहहीन व्यक्तिहरूलाई नवजीवन, नयाँ प्रेरणा र शक्ति दिनका लागि ओमको प्रयोग प्रचलित भयो।

संकटमा, विपत्तिमा, युग युगमा ओम शब्दको उच्चारणबाट आत्मविश्वास प्राप्त हुन्छ। नयाँ ढंगले जीवन संग्राममा आरुढ हुन सकिन्छ। हरेक विपत्तिमा मानिसलाई साहस दिने ओम हो। ओम ब्रह्मबीज हो, त्रिविद ओंकाररूपी ब्रह्मको संक्षिप्त रूप हो। अत: यसलाई धारण गर्नाले नयाँ दैवी शक्तिको प्रादुर्भाव हुनु साधारण कुरा हो। प्रत्येक बुद्धिवादी यसलाई सजिलै बुझ्न सक्छन्।

गहिराइका साथ ओम शब्दलाई जाँच्नुहोस्।

अ, उ, म् को संयोगबाट यो शब्द बनेको छ। ओम परमात्माको सर्वोत्तम नाम हो । वेदादि शास्त्रमा परमात्माको प्रमुख नाम ओम नै बताइएको छ ।

माण्डूक्योपनिषद्मा लेखिएको छ–

**'ओमित्येतदक्षरम् इदं सर्वं तस्योपाख्यानं भूतं भवद् भविष्यदिति सर्वमोंकार एव ।'** अर्थात् ओम त्यो अक्षर हो, जसमा सम्पूर्ण भूत, वर्तमान तथा भविष्यत् ओमकारको सानो व्याख्यान हो । सबै शक्तिहरू, ऋद्धि र सिद्धिहरू यस ओमकारमा भरिएका छन् ।

कठोपनिषद्मा यमराजले नचिकेतालाई ओमको महिमा वर्णन गर्दै यसो भन्छन्–

सारा वेद जुन भगवान्को वर्णन गर्दछन्, समस्त तपलाई प्राप्त गर्न साधक साधना गर्छन्, जसको इच्छाबाट मुमुक्षुजन ब्रह्मचर्यको पालन गर्छन्, त्यस पदलाई म संक्षेपमा बताउँछु–

# नाथदृष्टिमा ॐकार

***अद्वैतोपरिवर्तिनाथ उदितो यत्र ध्वनिः संततो***
***नाथो विन्दुरुतापि शक्तिरुदिता सा चार्द्धमात्रात्मिका ।***
***ऊरुद्रो हरिरो विधिमिति स मे ध्येयोऽस्तु नित्यं महा-***
***नोंकारोऽखिलशब्दबीजमबुधैज्ञातरूपो मुदे ॥***

**ज**हाँ निरन्तर ॐकार (रूप) बाट अतीत सूक्ष्मातिसूक्ष्म अनाहत सहज ध्वनित भइरहन्छ, त्यहाँ अद्वैतभन्दा पर परम पदमा महानाथ विद्यमान रहनुहुन्छ । बिन्दु नाथस्वरूप हो र शक्ति अर्धमात्रावस्था हो । उकार रुद्र, अकार विष्णु र मकार ब्रह्म हो । रुद्र, विष्णु, ब्रह्मात्रिदेवात्मक स्वरूप रूप दुर्ज्ञेय छ र त्यो शब्द समूहको बीजस्वरूप हो, यसबाट मेरो सच्चिदानन्द स्वरूपको अनुभूति स्वस्थ होस् ।

*अयमोंकारो महासिद्धानां ध्येयस्तस्य स्वरुपम्-उकारोऽत्ररुद्रस्वरुपमर्द्धमात्रा शक्तिस्वरुपं बिन्दुर्नाथस्वरुपमर्द्धमात्रायां जातोऽकारो विष्णुस्वरुपं विन्दोर्जातो मकारो ब्रह्मस्वरुपं ध्वनिर्निराकारनाथस्वरुपं व्यापकं ध्वनिर्वर्णाश्चोभयमपि मिलितं पूर्ण यदद्वैताद्वैतविलक्षणं साकार-निराकारातीतमद्वैतोपरिवर्ति महानाथस्वरुपमिति । किंचात्रौंकारि उकारोबिन्द्वर्द्धमात्रयोर्योगादेव । बिन्दुयोगान्म कारोऽर्द्धमात्रायोगादकार इति । तथा चोंकारे नाथशिवक्तिरुपप्राबल्यं-विष्णुब्रह्मस्वरुपयोरप्राबल्यमत एवात्रेतद्देवता यध्यानं महासिद्धैर्मुख्यत्वेन क्रियते, पुनर्ध्वनिर्निराकारनाथरुपं-ध्वनिवर्णश्चो भयात्मकः पूर्णनाथस्तु साम्प्रतमस्ति तथास्त्येवेति ब्रह्मविष्णुध्यानतो नाथश्विशक्तीनां ध्यानमुत्तममुक्तं तत्रापि नाथध्यानं बलिष्ठम् । उकारो यद्योकारः स्यात्तदा मात्रा शक्त्यैव । उकारोऽपि यद्योंकारः स्यात्तर्हि बिन्दुशक्त्येव, बिन्दुश्च यद्यपि वर्णस्तथापि तत्र स्वरस्याधिक्यम्, स्वरश्च वर्णापेक्षया बलवानेव । कथम् ? तत्र ध्वनिभागस्याधिक्यात् ध्वनिश्च नाथरुपमेवातो नाथध्यानं बलिष्ठमित्युक्तम् । तदुक्त योगशास्त्रे–*

यो ॐकार महासिद्धका लागि ध्येय हो; त्यसको स्वरूप यसप्रकार छ– ॐकारमा उकार

**एतदालम्बनं श्रेष्ठमेतदालम्बनं परम् ।**
**एतदालम्बनं ज्ञात्वा ब्रह्मलोके महीयते ॥**

यही 'ओम' सबैको श्रेष्ठ अवलम्बन हो । यही सर्वोत्कृष्ट आलम्बन हो । यसै शक्तिपूर्ण शब्दको सहारा लिएर ब्रह्मलोकमा महिमान्वित भइन्छ ।

ओमको शक्ति अपार छ । यसको उच्चारणबाट मानिसमा शुद्ध सात्त्विक दैवीभाव उत्पन्न हुन्छ किनकि परब्रह्मको शक्तिदायक नाम ओम हो । विराट्, अग्नि, विश्व आदि परमात्माका नाम 'अ'अन्तर्गत छन्, हिरण्यगर्भ, वायु, तेजस 'म'कार अन्तर्गत छन् र ईश्वर, आदित्य र अज्ञादि परमात्माका नाम मकारबाट चिनिन्छन् ।

जो सँग ओम छ, ऊ सँग अनन्त दैवीशक्ति छ, बल छ, बुद्धि छ, जीवन छ र इन्द्रियहरूको संयम छ ।

जय गुरुदेव !

रुद्रस्वरूव, अर्धमात्रा शक्तिस्वरूप, बिन्दु नाथस्वरूप, अर्धमात्राबाट उत्पन्न अकार विष्णुस्वरूप, बिन्दुबाट उत्पन्न मकार ब्रह्मास्वरूप र ध्वनिव्यापक निराकार नाथस्वरूप हो । ध्वनि र वर्ण यी दुवैको मेलबाट जुन पूर्णरूप बन्छ, त्यो द्वैत र अद्वैतभन्दा विलक्षण (अतीत) साकार र निराकारभन्दा पर एवं अद्वैतभन्दा अतीत महानाथस्वरूप छ । यस ॐकारमा उकार बिन्दु र अर्धमात्रा यी दुवैको योगबाट नै तथा बिन्दुको योगबाट मकार र अर्धमात्राको योगबाट अकार उत्पन्न हुन्छ । त्यसैले ॐकारमा नाथ, शिव र शक्तिको रूपको प्रबलता शक्तिमत्ता सत्ता तथा ब्रह्मा र विष्णुको स्वरूपको शक्ति-न्यूनता छ । यसैकारण महासिद्ध ॐकारमा यी तीनै देवताहरूको ध्यान मुख्यरूपमा गरिन्छ । पुनः ध्वनि निराकारनाथस्वरूप हो तथा ध्वनि र वर्ण यी दुवैको सम्मिलित रूप नै पूर्णनाथ हो, सदैव नै विद्यमान छ । त्यसैले ब्रह्मा र विष्णुको ध्यानभन्दा नाथ, शिव शक्तिको ध्यान उत्तम भनिएको हो । त्यसमा पनि नाथको ध्यान सबैभन्दा प्रबल अधिक फलदायक हुन्छ । यदि उकार ओंकार हुन्छ भने मात्राको शक्तिबाट नै हुन्छ । यदि उकार पनि ॐकार हुन्छ भने बिन्दु शक्तिबाट नै हुन्छ । यद्यपि बिन्दु वर्ण हो तर पनि त्यसमा स्वरको अधिकता हुन्छ, स्वर वर्णको अपेक्षा बलियो हुन्छ किनकि त्यसमा ध्वनि भागको अधिकता हुन्छ र ध्वनि नाथरूप नै हो । त्यसैले नाथको ध्यानलाई बलिष्ठ (प्रबल) मानिन्छ । यस्तो योगशास्त्रमा निरुपित छ ।

*ब्रह्मग्रन्थि ततो भित्त्वा विष्णुग्रन्थिं भिनत्त्यसौ ।*
*विष्णुग्रन्थिं ततो भित्त्वा रुद्रग्रन्थिं भिनत्यसौ ।।*
*रुद्रग्रन्थिं ततो भित्त्वा मोहमयीं लताम् ।*
*उद्घाटयत्ययं वायुं ब्रह्मद्वारं सुगोपितम् ।। इति ।।*

यो (नाथको ध्यान) ब्रह्मग्रन्थि, जुन मणिपुर चक्रमा स्थित भनिएको छ, लाई भेदन गरेर (हृदयस्थित अथवा विशुद्ध चक्रमा स्थित) विष्णुग्रन्थिलाई विदीर्ण गर्दछ । त्यसपछि विष्णुग्रन्थिलाई विदीर्ण गरेर आँखीभौँको मध्यमा स्थित रुद्रग्रन्थिलाई भेदन गर्दछ । त्यसपश्चात् रुद्रग्रन्थिको भेदन गरेर र मोहमयी लता (अज्ञानवृत्ति) लाई काटेर यसले ब्रह्मरन्ध्रमा गुप्त रूपले स्थित प्राणवायुलाई उद्घाटित गर्दछ– प्राणवायुको संचार गर्दछ ।

# महानाथ आराध्यदेव भगवान् श्री पशुपतिनाथ

**ध्यायेन्नित्यं महेशं रजतगिरिनिभं**
**चारुचन्द्रावतंसं**
**रत्नाकल्पोज्ज्वलाङ्गं**
**परशुमृगवराभीतिहस्तं प्रसन्नम्**
**पद्मासीनं समन्तात्**
**स्तुतममरगणैर्व्याघ्रकृत्तिं**
**विश्वाद्यं विश्ववन्द्यं निखिलभयहरं**
**पञ्चवक्त्रं त्रिनेत्रम् ॥**

यस ध्यान श्लोकमा महेशका पाँच मुख मानिएका छन् । ती पाँच मुख क्रमशः साम, अथर्व, ऋग्, यजु र ओङ्कारादि समस्त मन्त्रका विस्तारक मानिएका छन् । ती मुखहरू चार दिशामा र एक ऊर्ध्वमुख मानिएका छन् । ती मुखको वर्णन यहाँ प्रस्तुत छ–

**पूर्वमुख सामवेदनादको विस्तारक**

**संवर्ताग्नितडित्प्रदीप्तकनकप्रस्पर्द्धितेजोऽरुणं**
**गम्भीरध्वनि सामवेदजनकं ताम्राधरं सुन्दरम् ।**
**अर्द्धेन्दुद्युतिलोलपिङ्गलजटाभारप्रबद्धोरगं**
**वन्दे सिद्धसुरासुरेन्द्रनमितं पूर्वं मुखं शूलिनः ॥**

प्रलयकालको अग्निको जस्तो, विजुलीको जस्तो, तातेको सुनको जस्तो, तेजले रक्तवर्ण भएको, गम्भीर ध्वनिले युक्त भएको, सामवेदको उत्पादक भएको, रक्तवर्ण भएको, अत्यन्त सुन्दर स्वरूप भएको, अर्ध चन्द्रमाको कान्तिले चञ्चल, कैलो जटाको भारलाई सर्पले बाँधेको, सिद्ध, देवता तथा असुरहरूले नमस्कार गरिएको त्रिशूलधारी भगवान् पशुपतिको पूर्वमुखलाई म वन्दना गर्दछु ।

**दक्षिणमुख अथर्ववेदनादको विस्तारक**

**कालाभ्रभ्रमराञ्जनद्युतिनिभं व्यावृत्तपिङ्गेक्षणं**
**कर्णोद्भासितभोगिमस्तकमणिप्रोन्नद्धदंष्ट्राङ्कुरम् ।**
**सर्पप्रोतकपालशुक्तिशकलव्याकीर्णवक्षोरगं**
**वन्दे दक्षिणमीश्वरस्य वदनञ्चाथर्वनादोदयम् ॥**

कालो आकाश, कालो भ्रमर, कालो अञ्जनको जस्तो कान्ति भएको, कैलो वर्णको, दृष्टिलाई घुमाउने भएको, कानहरूमा (बेरिएका) सर्पहरूको शिरका मणिले सुशोभित, विशेष रीति युक्त दन्तपङ्क्तिले सुशोभित भएको, सर्पहरूले (नै) व्याप्त भएको, सिपीको आकृतिका कपालले व्याप्त वक्षःस्थल भएको, भगवान् पशुपतिको अथर्ववेदध्वनिको विस्तार गर्ने दक्षिणमुखलाई नमस्कार गर्दछु ।

**पश्चिममुख ऋग्वेदनादको विस्तारक**

**प्रालेयाचलचन्द्रकुन्दधवलं गोक्षीरफेनप्रभं**
**भस्माभ्यक्तमनङ्गदेहदहनज्वालावलीलोचनम् ।**
**ब्रह्मेन्द्रादिमरुद्गणार्चितपदं ऋग्वेदनादोदयं**
**वन्देऽहं सकलक्तलक्तरहितं स्थाणोर्मुखं पश्चिमम् ॥**

हिमालय, चन्द्र र कुन्दपुष्पको जस्तो श्वेत वर्णको, गाईको दूधको जस्तो कान्ति भएको, लेपनले युक्त भएको (भस्मले सुशोभित भएको), कामदेवको

शरीरलाई दहन गर्ने, (अग्निको) ज्वालाका पङ्क्तिले युक्त नेत्र भएको, ब्रह्मा-इन्द्र आदि देवगणहरूद्वारा पुजित चरण भएको, ऋग्वेदको ध्वनिलाई विस्तार गर्ने भएको, सम्पूर्ण कलाहरूले युक्त भएको, कलङ्कले रहित भएको भगवान् स्थाणु (पशुपति) को पश्चिममुखलाई म वन्दना गर्छु ।

**उत्तरमुख यजुर्वेदनादको विस्तारक**

**गौरं कुङ्कुमपक्तगन्धसलिलं व्यापाण्डुगण्डस्थलं**
**भ्रूविक्षेपकटाक्षवीक्षणलसत् संसक्तकर्णोत्पलम् ।**
**स्निग्धं बिम्बफलाधरं प्रहसितं नीलालकं सुन्दर**
**वन्दे याजुषवेदघोषजनकं वक्त्रं हरस्योत्तरम् ॥**

गौर वर्ण भएको, कुङ्कुम चन्दनको गन्धले युक्त जल (गङ्गाजीको जल) ले युक्त भएको, विशेष रूपले श्वेत गण्डस्थल (गाला) भएको, भ्रूविक्षेपले युक्त कटाक्षपातले सुशोभित कर्णोत्पल (कानको गहना) भएको, (मायाले, स्नेहले) अत्यन्त कोमल भएको, बिम्बफल (गोलकाँक्री) को जस्तो (रातो) ओठ भएको, निरन्तर हास्यले युक्त भएको, नीला केशहरूले युक्त भएको, अत्यन्त सुन्दर भएको, यजुर्वेदको ध्वनिलाई विस्तार गर्ने भएको भगवान् हर (पशुपति) को उत्तरमुखलाई म नमस्कार गर्दछु ।

**ऊर्ध्वमुख ओङ्कारादि समस्त मन्त्रहरूको विस्तारक**

**व्यक्ताव्यक्तनिरूपितञ्च परमं षट्त्रिंशतत्त्वात्मकं**
**तस्मादुत्तरतत्त्वमक्षरपदं ध्येयं सदा योगिभिः ।**
**ओंक्तारादिसमस्तमन्त्रजनकं सूक्ष्मातिसूक्ष्मात् परम्**
**वन्देऽहं परमेश्वरस्य वदनं खव्यापितेजोमयम् ॥**

व्यक्त र अव्यक्त रूपले निरूपण गरिएको (अव्यक्त मूल प्रकृति र त्यसबाट उत्पन्न व्यक्ति मद, अहङ्कार आदि रूपमा पनि स्थित भएकोले व्यक्ताव्यक्त स्वरूपले मानिएको), त्यसभन्दा परम (प्रकृतिभन्दा पनि पर) रूप भएको, छत्तीस तत्त्व स्वरूप भएको, छत्तीस तत्त्वभन्दा पनि पर उत्तर तत्त्व रूपमा (तत्त्वातीत रूपमा) स्थित भएको, अक्षरपद भएको, (अविनाशी, अनश्वर, पूर्ण स्वातन्त्र्यले युक्त भएको) योगीहरूद्वारा सदा ध्यान गरिने भएको, ओङ्कार आदि समस्त मन्त्रहरूको उत्पादन गर्ने (विस्तार गर्ने) भएको, सूक्ष्म (प्रकृति) र अति सूक्ष्म (माया र शक्ति) भन्दा पनि परतर रूपमा (परम शिव रूपमा) स्थित भएको परमेश्वर (पशुपति) को आकाशव्यापी तेजोमय मुखलाई म वन्दना गर्दछु ।

भगवान् पशुपतिनाथको एक (प्रथम) मूर्ति ऊर्ध्वरोम भएको भयावह छ । प्रथम सद्योजात मूर्ति जाग्रत अवस्था रूपको हो । त्यो संसार रूप भएको र क्लेशकर हुनाले भयप्रद छ । उनै भगवान्को द्वितीय मूर्ति सूर्यको जस्तो ज्योतिःस्वरूप स्वयंप्रकाश छ । यो अघोर मूर्ति सूर्यस्वरूप हो, यो मूर्ति स्वप्नावस्थात्मक हो र संसारमा प्रवृत्तिप्रयोजक हुने कर्मको त्यस बेलामा (स्वप्नावस्थामा) अभाव हुनाले यो मूर्ति लय रूप हो । उनै भगवान्को तृतीय मूर्ति परमात्मा चन्द्रमाको हो । भगवान्को तृतीय वामदेव मूर्ति चन्द्रस्वरूप हो, यो मूर्ति सुषुप्ति अवस्थात्मक हो र 'अस्य च सुप्तं महाप्रलयः' इत्यादिमा यस अवस्थालाई प्रलय रूप भनिएको हुनाले त्यो मूर्ति संहारकारक हो । भगवान्को चतुर्थ मूर्ति

कुबेरस्वरूप हो, यो मूर्ति कुबेरको अधिष्ठात्री स्वरूप हो। भगवान्को पञ्चम मूर्ति ब्रह्मस्वरूप र परमपद स्वरूप हो र त्यस स्वरूपलाई सूक्ष्म ध्यानले चिन्तन गर्नेहरूले देख्दछन् । भगवान् पशुपतिको पञ्चम ईशान मूर्ति परब्रह्मस्वरूप, परमपद मोक्षस्वरूप हो र त्यस मूर्तिलाई नै 'ईशानः सर्वविद्यानामीश्वरः सर्वभूतानाम्' 'यो ईशान मूर्ति सम्पूर्ण विद्याहरूको र सम्पूर्ण प्राणीहरूको नियामक हो' भनिएको छ। यसप्रकार भगवान् रुद्र (शिव) पाँच प्रकारले आविर्भूत हुनुहुन्छ । लोक (संसार) र वेदमा पनि शैवी यो मूर्ति संयुक्त र पृथक्‌पृथक् वर्णन गरिएको छ। प्रथम मूर्तिले क्रीडा गर्छ । भगवान् शिवको क्रीडास्वरूप नै यो विश्व हो । द्वितीय मूर्तिले तपस्या गर्छ । तृतीय मूर्तिले लोकहरूको हरण (नाश) गर्छ । चतुर्थ मूर्तिले प्रजाहरूको सृष्टि गर्छ । पञ्चम मूर्तिले ज्ञानको सत्ता राख्ने कार्य गर्छ र यो सबैलाई व्याप्त गरेर स्थित छ ।

भगवान् शिव (पशुपतिनाथ) सबैका स्वामी, सम्पूर्ण प्राणीमा स्थित हुनुहुन्छ। उहाँको सृष्टि र प्रलय गर्नु नै चरित्र हो । त्यसै हुनाले सम्पूर्ण प्राणीहरूका रक्षक र ईशान (स्वामी) भनिनुहुन्छ। प्राणीहरूको उत्पत्ति र नाश (सृष्टि र संहार), संगति (संयोग) र गति (वियोग, परलोकादि गमन), विद्या र अविद्या सबै (भगवान्) जान्नुहुन्छ, त्यसै हुनाले उहाँ भगवान् भनिनु भएको छ। भगवान् शिव (पशुपति) महान्‌भन्दा पनि महान् हुनुहुन्छ र महान् (मानिएका) ब्रह्मादि (दैव) हरूद्वारा पूजित हुनुहुन्छ । यो विश्व पनि महत (ठूलो नै) छ (त्यसको पनि देव हुनाले) महादेव मानिनु भएको छ । अतः भगवान् पशुपति चर र अचर सहित सम्पूर्ण त्रैलोक्यलाई नाश गर्नुहुन्छ र साथै पशु (जीव) हरूको पाशको (अविद्याकृत बन्धनको) पनि नाश गर्नुहुन्छ, जीवको रक्षण गर्ने हुनाले पशुपति मानिनु भएको छ । भगवान् पशुपति स्वयं नै उत्पन्न भएर प्रिय लोकहरूभन्दा अत्युत्तम, सर्वोत्कृष्ट हुनुहुन्छ, स्वयं नै प्रमाता हुनुहुन्छ । आफूले नै आफूलाई जान्नुहुन्छ, अरू कसैले उहाँलाई यथार्थ जान्न सक्तैनन् ।

यस्ता असीम परिपूर्ण भगवान् पशुपतिको वास्तविक स्वरूप विश्वोत्तीर्ण (यस प्रपञ्चमय जगत्‌देखि पर, परतम) भए पनि विश्वमय पनि छ । यो विश्व पनि उहाँकै स्वरूप हो । भगवान् पशुपतिमा वास्तविक रूपमा देशकृत, कालकृत, आकारकृत कुनै सङ्कोच छैन । यसको अर्थ हो कि भगवान् सर्वत्र हुनुहुन्छ, उहाँ अनादि हुनुहुन्छ र सदा रहिरहनुहुन्छ, उहाँ सर्वस्वरूप हुनुहुन्छ । सम्पूर्ण विश्व नै उहाँकै आकार हो। उहाँलाई कुनै सीमाभित्र कैद गर्न सकिन्न। उहाँ परिपूर्ण हुनुहुन्छ र उहाँमा कुनै न्यूनता छैन। वेदले गर्वोक्तिका साथ भगवान् पशुपतिनाथको पूर्णताको वर्णन यसरी गरेको छ–

**पूर्णपदः पूर्णमिदं पूर्णात् मूर्णमुदच्यते ।**
**पूर्णस्य पूर्णमादाय पूर्णमेवावशिष्यते ॥**

(शतपथ ब्राह्मण १४।४।४।१)

अर्थात् भगवान् शिव (पशुपति/ब्रह्म) को परोक्ष (विश्वोत्तीर्ण) रूप आकाशतुल्य व्यापक र निरूपाधिक छ, अनन्त छ, असीम छ । अनि उनै भगवान्को यो जो विश्वमय रूप छ, नाम र रूपको उपाधिले युक्त छ, त्यो पनि विश्वोत्तीर्ण (विश्वभन्दा माथि) स्वरूपले व्याप्त भएकोले पूर्ण नै छ। त्यस पूर्ण र असीम शिवबाट पूर्ण र असीम (अन्त नभएको अनन्त) यस विश्वको उत्पत्ति हुन्छ। यसप्रकार पूर्णबाट पूर्ण नै निक्लेपछि पनि (जगत् त्यसैबाट उत्पन्न भए पनि) त्यो परमशिव पशुपति पूर्ण नै रहन्छ, त्यसको पूर्णतामा केही न्यूनता रहँदैन ।

हामीमा पनि न्यूनता नरहोस्, हामी पनि परिपूर्ण बन्न सकौं, हाम्रो परिपूर्णता सबैका लागि काम आओस्, हामीबाट अन्यलाई परि पूर्णतातिर डोर्‍याउने कार्य हुन सकोस्, भगवान् पशुपतिनाथको चरणकमलमा भक्तिभावपूर्वक यही प्रार्थना गर्दछौं ।

# आराध्यदेव पशुपतिनाथको उत्पत्तिप्रसंग

पशुपतिनाथको उत्पत्ति सम्बन्धमा हिमवत्खण्डका दश अध्यायहरुमा विस्तारसँग लेखिएको छ–

सम्पूर्ण विश्व जलमग्न थियो । रजोगुण र तमोगुणको प्रभावमा परेका ब्रह्मा र विष्णुका बीच 'को ठूलो' भन्नेमा ठूलो विवाद चर्कियो । भगवान् शिवले अन्तहीन ज्योतिपुञ्ज उत्पन्न गराएर अदृश्य हुँदै ज्योतिर्लिङ्गको आदि र अन्त पत्ता लगाउने नै ठूलो हुने घोषणा गर्नुभयो । अन्त पत्ता लगाउने होडमा विष्णु फेदतिर र ब्रह्मा टुप्पोतिर लागे । सप्तलोक गोलोकसम्म पुग्दा पनि ब्रह्माले ज्योतिपुञ्जको अन्त पत्ता लगाउन सकेनन् । उनले सुरभी, वन्धूक, कैत्ती र जपा कुसुमलाई यसबारे सोधे । ज्योतिपुञ्जको आदि अन्त थाहा नभएको उनीहरुको जवाफ पाएर ब्रह्माले आफूले लिङ्गको पुछार भेट्टाएको कुरामा साक्षी बस्न आग्रह गरे । उनीहरुलाई साथै लिएर ब्रह्मा त्यस स्थानमा पुगे जहाँ उनी विष्णुसँग ज्योतिपुञ्जको आदि पत्ता लगाउन छुट्टिएका थिए ।

विष्णु पनि पाताल लोकको ६ लोक पार गरिसक्दा पनि आदि पत्ता नलागेर हैरान थिए । महातलको अन्तमा उनले शेषनागसँग ज्योतिपुञ्जको अन्तका बारेमा जान्न चाहे । शेषनागले अनभिज्ञता प्रकट गरेपछि पत्ता हुन सक्ने सम्भावना नदेखेर उनी

***‘नेप कहलाइएका गोपालकी बहुली नाम भएको कैली गाई प्रतिदिन बाग्मतीको तीरमा गाई प्वालमा पूजाको लागि दूधको धारा बगाउने गर्न लागी । ती गाईले सेचन गर्न लागेको त्यो ठाउँ गोपालले देखे, खनेर हेर्दा श्री पशुपति भट्टारकको प्रादुर्भाव भयो ।’***

फर्किहाले । साथै ल्याएका साक्षीहरुलाई अघि सारेर आफूले ज्योतिर्लिङ्गको टुङ्गो लगाएको ब्रह्माको दावीपछि अकस्मात् आकाशवाणी भयो– ‘हे विष्णु, यिनको झूटो कुराले खिन्न नहोऊ, हे कामधेनु, झूटो बोलेकीले तिम्रो मुख अपवित्र होस्, हे फूलहरु, अब तिमीहरु मलाई चढ्ने छैनौ ।’ आकाशवाणी सुनेर देवताहरुले श्रीमहादेवको स्तुति गर्न लागे । स्तुतिबाट श्रीमहादेव प्रसन्न हुनुभयो । उहाँले ब्रह्मालाई आदेश आदेश दिनुभयो– ‘मेरो अनुग्रहले तिमी नै प्रथम सृष्टिकर्ता हुनेछौ र पितामहको नामले प्रसिद्ध हुनेछौ ।’ उहाँले विष्णुलाई लक्षित गर्दै भन्नुभयो– ‘तिमीले संसारका प्राणीहरुको पालन गर्नेछौ र स्थितिकर्ताको नामले प्रसिद्धि पाउनेछौ । म हजारौँ वर्षसम्म मुक्तिदायक सुवर्णमणि नेपालभूमिमा यसै लिङ्ग रुपमा देवताहरुबाट पूजित भइरहने छु, म्लेच्छहरुको अन्त भएपछि श्लेष्मान्तकमा पशुरुपमा क्रीडा गर्नेछु, त्यसबेला देवता, ब्राह्मण, सिद्धहरुले मेरो नाम ‘पशुपतिनाथ’ राख्नेछन्, त्यो लिङ्ग पृथ्वीमा गाडिनेछ र कामधेनुले त्यसलाई पत्ता लगाउने छन्... ।’

कलियुगको थालनी भएपछि धर्मको लोप भयो । धर्मको लोप भएपछि ज्योतिर्लिङ्गबाट ज्योतिको दर्शन हुन छोड्यो । कामधेनु हरेक दिन त्यस ठाउँमा गएर आफ्नो दूध चढाउँथिन् । एकदिन कुनै म्लेच्छले गाईले उक्त ठाउँमा दूध झारिरहेको देखेर के रहेछ भनी खनी हेर्दा ज्योतिमा डढी मरे । विष्णुले मणिमय पञ्चमुखी लिङ्ग बनाई ज्योतिलाई छोपिदिएपछि ज्वाला अदृश्य भयो ।

भाषावंशावलीमा पनि पशुपतिनाथ उत्पत्तिको कथा प्रायः समान देखिन्छ । यसमा पञ्चमुखी लिङ्ग बनाउने श्रेय भने इन्द्रलाई दिइएको पाइन्छ ।

संक्षेपमा लेखिएको गोपाल वंशावलीमा यस्तो उल्लेख भएको पाइन्छ–

‘नेप कहलाइएका गोपालकी बहुली नाम भएको कैली गाई प्रतिदिन बाग्मतीको तीरमा गाई प्वालमा पूजाको लागि दूधको धारा बगाउने गर्न लागी । ती गाईले सेचन गर्न लागेको त्यो ठाउँ गोपालले देखे, खनेर हेर्दा श्री पशुपति भट्टारकको प्रादुर्भाव भयो ।’

नेपाल महात्म्यमा श्रीमहादेव काशीबाट नेपाल आउनु हुँदा श्लेषमान्तक वनको आकर्षण देखेर मृगरुप धारण गरी यहीँ बस्नुभएको कथा पाइन्छ । देवताहरुको स्तुतिबाट प्रसन्न पशुपतिनाथले यहीँ बस्ने इच्छा प्रकट गर्नुभएको प्रसंग यसमा पाइन्छ ।

बौद्ध वंशावलीमा उल्लिखित कथासँग मृगरुप धारणको कथा केही मिल्न खोज्छ– क्रकुच्छन्द बुद्धले ‘मञ्जुश्रीले रोपेको गुह्येश्वरीको वनमा ब्रह्मा, विष्णु र महादेवलाई मृगका रुपमा देखेर आफ्ना शिष्यहरुसँग यी देवताहरु स्वयम्भू र गुह्येश्वरीका पूजक र जनताका रक्षक हुनेछन् भन्ने कुरा बताए ।

उनले भविष्यवाणी गरे– 'कलियुगमा उमेश्वर पशुपति ज्यादै प्रसिद्ध हुनेछन्, देवताहरु मृगका रुपमा देखा परेकाले त्यस स्थानको नाम मृगस्थली रहनेछ ।'

मृगरुपको कथालाई राइटको वंशावलीमा यसरी वर्णन गरिएको पाइन्छ– मृगरुपधारी शिव ज्योतिरुपमा प्रकट भएर सातलोक माथि र सातलोक तलसम्म व्याप्त भए । ज्योतिरुपको अन्त थाहा पाउन जानु अघि ब्रह्मा र विष्णु छुट्टिएको ठाउँ 'विष्णुगुप्त' भनियो । श्लेषमान्तक (लप्सी) का अनेक रुखहरु भएकाले त्यस ठाउँको नाम श्लेषमान्तक वन रहन गयो । त्रेतायुगको तीनसय वर्ष बाँकी छँदा शिवले बद्री केदारबाट आई यस वनमा दर्शन दिनुभएको थियो । महादेवको ज्योतिको आदि अन्त थाहा पाउन गएका ब्रह्मा र विष्णु फर्केर हाल शेषनारायण रहेको फर्पिङ्गमा आइपुगे । पछि ब्रह्माले झूटो बोलेको थाहा पाएर श्रीमहादेवले उनको मूर्तिको पूजा नहुने श्राप दिनुभयो । मुखले भने ब्रह्माको समर्थन र पुच्छर भने 'होइन' भन्ने आशय बुझिने गरी हल्लाएकीले कामधेनुले पुच्छर पवित्र भए पनि मुख अपवित्र रहने श्राप पाए । पछि विष्णु शेषनाग र गाईका साथ त्यहीँ बसे भने ब्रह्मा लोप भए ।'

श्रीकृष्णद्वारा पानीको निकास खोलिएपछि पद्मकाष्ठ गिरि (कीर्तिपुर) मा बसेका गोठालाहरुले ने नामक गाईको कारण ज्योतिर्लिङ्गको पत्ता लागेको र त्यसबाट गोठालाको ज्यान गएको कथा लिइएको छ : 'ने मुनि, जसबाट नेपाल नाम उत्पन्न भयो, यहाँ आए तथा कलियुगमा क्षेत्रीय राजा हुने

***साथै ल्याएका साक्षीहरुलाई अघि सारेर आफूले ज्योतिर्लिङ्गको टुङ्गो लगाएको ब्रह्माको दावीपछि अकस्मात् आकाशवाणी भयो– 'हे विष्णु, यिनको झूटो कुराले खिन्न नहोऊ, हे कामधेनु, झूटो बोलेकीले तिम्रो मुख अपवित्र होस्, हे फूलहरु, अब तिमीहरु मलाई चढ्ने छैनौ ।'***

छैनन् भन्ने कुरा घोषणा गर्दै ज्योतिबाट मरेका गोठालाका छोरा भूमागतलाई राजा नियुक्त गरे । भाषा वंशावलीअनुसार भूमागतले पशुपतिको अर्को मूर्तिको स्थापना गरेर अग्निशर्मा नामक ब्राह्मणलाई पुजारी नियुक्त गरी नित्यपूजाको स्थिति बसाए । तिनको पालामा पशुपतिनाथ किरात रुपमा श्लेषमान्तक वनमा विहार गर्नुहुन्थ्यो । परवर्ती चन्द्रवंशी राजा निमिष्टाङ्कार वर्माको उल्लेख गर्दै भाषा वंशावली लेख्छ– यिनले पुरानो पशुपति मूर्तिमाथि अर्को पशुपति चतुर्व्युहमूर्ति बनाई स्थापित गरे तथा पूजा चलाए । पछिका राजा शुपुष्पदेवको बारेमा भाषा वंशावली थप्छ– यी राजाले पशुपति मन्दिर अग्लो बनाए तथा सुनको छाना बनाई जीर्णोद्धार गरे । राइटको वंशावलीमा यिनलाई पशुप्रेखदेव भनिएको छ र यिनको समय कलि सम्वत् १२३४ भन्ने बताइएको छ । भाषा वंशावलीको अर्को प्रसंगअनुसार राजा भाष्कर वर्माले अनेकौं मुलुक जितेर सुन, चाँदी र रत्नहरुको राशि पशुपतिलाई चढाए र नगरलाई सिंगारे ।

स्रोत : १. नेपालको पौराणिक इतिहास, पाण्डे र रेग्मी, २. भगवान् पशुपतिनाथको स्वरुप तथा महिमा

# रातो मत्स्येन्द्रनाथ

नेपालका एक प्रसिद्ध वृष्टि देवताका रूपमा रातो मत्स्येन्द्रनाथलाई लिने गरिन्छ । स्थानीय एक विज्ञका अनुसार रातो मत्स्येन्द्रनाथको ३६० स्वरूप रहेको तर प्रचलनमा भने १०८ रहेको र यसमध्ये पनि १२ प्रकारका मत्स्येन्द्रनाथ प्रमुख रहेका छन् । करुणामय, लोकनाथ, लोकेश्वर, आर्यावलोकितोश्वर आदि थुप्रै नामबाट मत्स्येन्द्रनाथलाई चिनिने भएता पनि नेवार समुदायमा यिनलाई 'बुंग द्यः' को नामबाट चिनिन्छ ।

बुङ्मती काठमाडौँबाट करिव १२ कि.मी. दक्षिणमा रहेको सानो गाउँ हो । यहाँ नेवार बस्ती मात्र भेटिन्छ । बुङ्गको नेवारी रूप 'ब्वना' हो र यसको अर्थ 'आह्वान' हुन्छ। यसरी बुंग द्य: को मौलिक स्वरूप 'ब्वना द्यः' अर्थात् पुकार गरेर ल्याएको देवता हुन आउँछ ।

अर्थात् रातो मत्स्येन्द्रनाथ स्थापना भएको बुङ्मतीको मन्दिर शिखर शैलीमा निर्माण गरिएको छ। यो मन्दिर ३२ हात लामो छ । मन्दिरको सबैभन्दा माथिको सुनको जलप लगाएको गजुरले शोभा बढाएको छ भने त्यसको तलतिर स-साना आठवटा गजुर पनि बनेका छन् । यस मन्दिर वरिपरिका पुराना बासिन्दाहरूको भनाइअनुसार यस मन्दिरमा प्रयोग गरिएका ढुङ्गाहरू विशेष विधि र विशेष पदार्थबाट निर्माण भएको हो । चुन ढुङ्गालाई पिसेर त्यसमा मास, चाकु, इँटाको धूलोको मिश्रण मिलाएर बनाइएको शिला वा पत्थरहरू यस मन्दिरको निर्माणमा प्रयोग गरिएका छन् । ढुङ्गा बाहेक यस मन्दिरमा प्रयोग भएका काठहरूमा पनि निकै कलात्मक एवं आकर्षक बुट्टाहरू कुँदिएका छन् ।

चारैतर्फ ढोका रहेको यस मन्दिरको दक्षिणपट्टिको प्रवेशद्वारभित्र घैँटाहरूको संयोगबाट निर्मित मूर्ति रहे को छ। चाँदीको घैँटाहरूबाट बनाइएको मानिएको यस मूर्ति आकर्षकका साथै यसमा अन्य थुप्रै विशेषताहरू रहे को भनाइ

स्थानीयबासीहरूको रहेको छ। यस मूर्तिभित्र बाह्रवर्षे मेलामा रातो मत्स्येन्द्रनाथलाई लुकाउने चलन छ । यहाँ रहेको रातो मत्स्येन्द्रनाथको मूर्तिको आधा खुट्टा चाँदीको र माथिको भाग भने सुनबाट निर्मित छ।

यस मन्दिरको वरिपरि सत्तल र अझ थुप्रै मन्दिरहरू रहेका छन्। यस मन्दिरमा ठूलो घण्टा र गरुडको मूर्ति पनि रहेको छ । मन्दिर परिसर ढुङ्गाले छापिएको छ । यस मन्दिरको अगाडि 'ह्यगृव भैरव'को निकै आकर्षक ठूलो मन्दिर पनि देख्न पाइन्छ । रातो मत्स्येन्द्रनाथको सामुन्ने उहाँका चेलाको रूपमा चिनिने मीननाथको सानो मन्दिर छ। त्यहाँ रहेको मत्स्येन्द्रनाथको मूर्तिलाई तान्त्रिक विधिबाट स्थापना गरिएको हो । आजसम्म पनि तान्त्रिक विधिद्वारा पूजाआजा हुँदै आइरहेको भएता पनि पहिले गरिने विशिष्ट पूजन पद्धतिमा भने समय समयमा केही फेरबदल भइरहेको भन्ने कुरा स्थानीयहरूको रहेको छ । यस मन्दिरमा १५ दिनको एकपटक मासु, अण्डा चढाउने परम्परा रहिआएको छ । बिहान बेलुकी नित्य पूजा हुने यस मन्दिरको लागि गुठीको व्यवस्था भएको भएता पनि पुजारीहरूलाई कुनै तलबको व्यवस्था नभएकोले मन्दिरमा चढाइएको भेटी नै पुजारीको आयस्रोतको रूपमा रहेको छ।

पूजनका लागि बिहान ४ बजे उठेर स्नान गराई मत्स्येन्द्रनाथलाई लुगा फेराइदिने र पाठादि सकेपछि मुख धोई परम्पराको स्तोत्रादि पाठ सहित पूजाआजा गर्ने परिपाटी रहेको छ। बिहानको पूजा ८ बजेदेखि ९ बजेसम्म गरिने तर बेलुकी चाहिँ आरती मात्र गरिन्छ। विशेष गरी सङ्क्रान्ति, अष्टमी पूर्णिमाको दिन बाहेक अझ पर्व जात्राहरूमा बढी भीड हुने गर्दछ। यहाँ २४ जना पुजारी रहने परम्परा आजसम्म पनि कायमै रहेको छ । यस मिनदरको नाममा १२ सय रोपनी जग्गा छ जहाँबाट उत्पादित अन्नादि त:बहालस्थित गुठी संस्थानमा बुझाउने गरिन्छ। यस मन्दिरका पुजारी एकपटक फेरिएपछि पुन: १५ महिनापछि पुजारी बन्ने पालो आउँछ।

वर्षको एकपटक रातो मत्स्येन्द्रनाथलाई समर्पण गरेर रथजात्रा गरिन्छ। गुरु गोरखनाथ उपत्यकामा धेरै लामो समयसम्म वर्षा नहोस् भनी नागहरूमाथि आसन जमाई बस्नु भएपछि मानिसहरूले १२ वर्षसम्म अनावृष्टि भई दु:ख खेप्नु पऱ्यो। खेतहरू सुक्न थाले र मान्छेले खान

*रथजात्रा शुरु हुनु अघि अक्षय तृतीयाका दिन बिहान रथजात्रा निर्विघ्न होओस् र मृतात्माहरुले सजिलै वैतरणी तरुन् भन्ने कामना गर्दै इपीवहीका ब्राह्मनहरुल ाई गाईदान गर्ने परम्परा छ ।*

पाएनन् । देशमा ठूलो संकट पऱ्यो । यस संकटलाई हटाउन राजा नरेन्द्रदेवले त्यसबेलाका प्रसिद्ध तान्त्रिक आचार्यलाई आह्वान गरेकाले तान्त्रिक आचार्यले आफ्ना तान्त्रिक शिष्य बन्धुदत्तलाई आज्ञा दिए । बन्धुदत्तको भनाइअनुसार गुरु गोरखनाथलाई आसनबाट उठाउन राजा नरेन्द्रदेव आचार्यहरू सहित मत्स्येन्द्रनाथलाई ल्याउन कामरूप कामाक्षा प्रस्थान गरे । मत्स्येन्द्रनाथलाई समस्या जाहेर गरी नेपाल आउन राजी गराए । मत्स्येन्द्रनाथ पनि आफू भमराको रूपमा नेपाल आउने वाचानुसार नेपाल आउनुभयो । आफ्नो गुरुको आगमन भएपछि गुरु गोरखनाथ सम्मानका लागि उठे । तत्पश्चात् नागहरू फुत्किएर वृष्टि भएको वंशावलीहरूमा उल्लेख भएको पाइन्छ ।

यसरी १२ वर्षसम्म वृष्टि नभएको र मत्स्येन्द्रनाथको आगमनपछि वर्षा भएर जनजीवन सामान्य भएकोले नेपाली समाजले मत्स्येन्द्रनाथप्रति आस्था, विश्वास र सम्मान स्वरूप हरेक वर्ष वर्षा होस् भनी जात्रा मनाएर उहाँलाई खुशी तुल्याउने गरिँदै आइएको मानिन्छ । यस जात्राको प्रचलन नरेन्द्रदेवले मत्स्येन्द्रनाथलाई बुङ्मतीमा स्थापना गरेर चलाएको मानिन्छ ।

बुंग द्यः लाई रथमा राख्नुअघि पुरुष र नारीलाई गरिने सम्पूर्ण संस्कारहरू जस्तो जातकर्म, नामकरण, अन्नप्रासन, उपनयन, चुडाकर्म, इही (बेल विवाह), गुफा राख्ने सम्पूर्ण संस्कारहरू गरिन्छ । रथारोहणको चौथो दिन रथलाई बुङ्मतीबाट बाजागाजासहित जाउलाखेल, छ्यासीकोट, भैँसेपाटी ग्वाखंचा भन्ने स्थानमा पुऱ्याइन्छ । रथजात्रा शुरु हुनु अघि अक्षय तृतीयाका दिन बिहान रथजात्रा निर्विघ्न होओस् र मृतात्माहरूले सजिलै वैतरणी तरून् भन्ने कामना गर्दै इपीवहीका ब्राह्मनहरूलाई गाईदान गर्ने परम्परा छ । नखु खोलाबाटै रथलाई भैँसेपाटीतिर तानेर लगिन्छ । त्यस अवसरमा मेला लाग्छ । त्यसपछि रथलाई विष्णुदेवी, रिङ्गरोड, धोबीघाट, ठाडोढुङ्गा, त्यागल हुँदै पुल्चोक पुऱ्याइन्छ । ठाडो ढुङ्गा र धोबीघाट पुगेपछि रथलाई एकदिन रोकेर पूजा गरिन्छ र बाजागाजा नबजाई पुल्चोक पुऱ्याउन चलन छ । परम्पराअनुसार पुल्चोकमा सोह्रखुट्टे पाटी र सैँबुमा कुमारीलाई ल्याई रथजात्रा देखाउनुपर्दछ ।

रथ पुल्चोक पुगेपछि मीननाथको रथलाई गाःबहालबाट तानेर पुल्चोकमा पुऱ्याइन्छ । बुङ्मतीमा मत्स्येन्द्रनाथको रथ तानेकै दिन मीननाथलाई पनि चकबहीबाट तानेर गाःबहाल पुऱ्याउने परम्परा रहेको छ । मत्स्येन्द्रनाथलाई रथारोहण गराएदेखि पाटनका

२२ टोलका मानिसहरू सांस्कृतिक बाजागाजसहित लय सेवा जाने क्रममा मत्स्येन्द्रनाथको रथ पुगेको ठाउँमा बिहानै गएर जल र प्रसाद लिएर धार्मिक पूजामा प्रयोग गरिने धातुबाट बनेको एक विशेष ऐना हेरेर फर्कन्छन् र यो लय सेवा रथलाई बुङ्मतीमा फर्काएपछि सकिन्छ ।

रथ लगनखेल पुगेपछि त्यहाँ रहेको खरीको बोट (माजु सीमा) मा एक फन्को घुमाइन्छ र भोलिपल्ट सोही स्थानमा भूतबलि गरेपछि भोलिपल्ट सोही खरीको बोटमा दुई फन्को घुमाएर निश्चित ठाउँमा पुगेपछि पूजापछि रथको टुप्पाबाट सिङ्गो नरिवल खसालिन्छ। उक्त नरिवल टिप्न सके इच्छित फल मिल्छ भन्ने जनविश्वासले गर्दा नरिवल टिप्नेको भीड देख्न सकिन्छ ।

रथ थतिटोलमा पुगेपछि बिहान सबेरै महिलाहरूले रथ तान्ने प्रचलन छ । लोककथाअनुसार अघिल्लो दिन जुन लुगा लगाएर

सुतेका थिए, त्यही लुगा लगाएर महिलाहरू रथ तान्न आउने परम्परा छ। रथ जाउलाखेल पुगेपछि पनि नरिवल खसाल्ने प्रचलन रहेको छ। नरिवल खसालेको दिन नै मत्स्येन्द्र नाथको देवाली तोकिन्छ ।

गा:बहालस्थित पोखरीको दक्षिणतर्फ मत्स्येन्द्रनाथ सहित चौबीस जना बराहीहरूको देवाली हुने परम्परा छ । पूर्णचण्डीलाई मत्स्येन्द्रनाथका कुलदेवता मानिन्छ। कसैकसैले भने म्हैपिका योगाम्बर नै मत्स्येन्द्रनाथका कुलदेवता हुन् भनेर मान्दछन्। देवालीकै दिनमा मङ्गलबजारमा चारथरिका जोशीहरूले जाउलाखेलतिर रथ तान्ने साइत जुराएपछि रथलाई त्यहाँ पुऱ्याइन्छ र ४ दिनपछि भोटो देखाउने चलन छ। तर १२ वर्षे मेलामा भने रथलाई बुङ्मती लगेर पुन: भोटो देखाइन्छ ।

जय गुरुदेव !

*सन्दर्भ सामग्री :*

*१. नेपालका चार प्रसिद्ध करुणामय लोकेश्वर, धनवज्र वज्राचार्य र टेकबहादुर श्रेष्ठ, २. नेपालीसंस्कृतिमा नाथ सम्प्रदाय : एक अध्ययन, सरिता के.सी. ।*

पेरक प्रसंग

# कालका पनि काल

जो ईश्वरको भक्त हो, उसको स्वामी ईश्वर हुनुहुन्छ । उसमाथि मृत्युको कुनै अधिकार हुँदैन । अनधिकार चेष्टा गरेमा मृत्युको पनि मृत्यु हुन्छ ।

गोदावरीको तटमा 'श्वेत' नामक एकजना ब्राह्मण बस्थे । उनको हरेक समय साम्ब सदाशिवको पूजामा निरन्तर व्यतीत हुन्थ्यो । उनी अतिथिहरूलाई भगवान् शिव नै मानेर खुब आदर-सत्कार गर्थे । उनको बाँकी समय भगवान्को ध्यानमा बित्थ्यो । उनको आयु पूरा भइसकेको थियो । तर उनलाई यस कुराको ज्ञान थिएन । उनलाई न त कुनै रोग नै लागेको थियो, न त शोक । त्यसैले आयु समाप्त भइसक्दा पनि उनलाई यसको आभास नै हुन सकेन । उनको सम्पूर्ण ध्यान भगवान् शिवमा केन्द्रीत थियो । समय आएपछि यमदूत उनलाई लिन आए । तर यमदूत उनको घरमा प्रवेश गर्न सकेनन् । यता मृत्युको समय अतिक्रमण भइसकेको थियो । चित्रगुप्तले मृत्युसँग सोधे– 'मृत्युदेव ! श्वेत अहिलेसम्म किन आएनन् ? तपाईंको दूत पनि आएको छैन ।' यो सुनेर मृत्यलाई श्वेतमाथि अति नै रीस उठ्यो । उनी स्वयं उनलाई लिन दौडे । घरको ढोकामा यमदूत डरले काँपिरहेका थिए । श्वेत त भगवान् शिवद्वारा सुरक्षित छन्, उनलाई हामीले देख्नै सकेका छैनौं । उनको नजिक जानु अत्यन्तै कठिन पनि छ ।'

दूतको कुरा सुनेर मृत्युको क्रोध झनै बढ्यो । उनी ब्राह्मणको घरमा घुसे । ब्राह्मणलाई आफ्नो घरभित्रको यस्तो अवस्थाको बारेमा केही पनि थाहा थिएन । मृत्युले झम्टिरहेको देखेर भैरव भगवान्ले भने– 'मृत्युदेव ! तपाईं फर्कनुहोस् ।' तर मृत्युदेवले भगवान् भैरवको कुरा सुन्या नसुन्या झैं गरेर श्वेतमाथि डोरी कसे । भक्तमाथि मृत्युको यो आक्रमण भैरवलाई सहन भएन । उनले मृत्युमाथि डण्डाले प्रहार गरे । मृत्युदेव त्यहीं लडे । यमदूत भागेर यमराज कहाँ पुगे । डराएर उनी काँपिरहेका थिए । मृत्युको मृत्यु भएको सुनेर यमराजलाई अति नै रीस उठ्यो । हातमा यमदण्ड लिएर आफ्ना सेनाका साथमा उनी श्वेत कहाँ पुगे ।

त्यहाँ भगवान् शंकरका पार्षद पहिलेदेखि नै तयार थिए । सेनापति कार्तिकेयको शक्ति-अस्त्रले सेनासहित यमराजको पनि मृत्यु भयो । यो अपूर्व समाचार सुनेर भगवान् सूर्य देवताहरूका साथ ब्रह्मा कहाँ पुगे । ब्रह्मा पनि सबैलाई लिएर घटनास्थल आइपुगे । देवताहरूले भगवान् शंकरको स्तुति गरेर भने– 'भगवन् ! यमराज सूर्यपुत्र हुन्, लोकपाल हुन् । उनले कुनै अपराध वा पाप गरेका छैनन् । त्यसैले यिनको बध हुनु भएन । यिनलाई जीवित गरिदिनुहोस्, होइन भने अव्यवस्था हुन जानेछ । भगवन् ! हजूरसँग गरिएको प्रार्थना कहिल्यै व्यर्थ जाँदैन ।'

भगवान् आशुतोषले भन्नुभयो– 'म पनि व्यवस्थाको पक्षमा नै छु । वेदमा एउटा व्यवस्था छ कि जो मेरो वा भगवान् विष्णुको भक्त हो, उसको स्वामी स्वयं हामी हुन्छौं । मृत्युको ऊमाथि अधिकार हुँदैन । यमराजको हकमा यो व्यवस्था गरिएको छ– आफ्ना अनुचरहरूका साथ उनले मेरो भक्तलाई प्रणाम गरुन् ।'

यसपछि भगवान् आशुतोषले नन्दीद्वारा गौतमी गङ्गा (गोदावरी) को जल मरेकाहरूमाथि छर्नुभयो । तत्क्षण सबै स्वस्थ भएर उठे ।

# प्रभु प्रार्थनाको
# मनोवैज्ञानिक स्वरूप र रहस्य

*(हामी सबैले प्रार्थना गर्ने गर्दछौँ । मन्दिर जाँदा होस् वा मस्जिद, गुरुद्वार जाँदा होस् वा गिर्जाघर अथवा घर, यतायता हुँदा प्रार्थना गर्दछौँ वा गरिरहेका हुन्छौँ । तर प्रार्थना कसरी गर्ने भन्ने कुरा प्रायःजसोलाई थाहा नहुन सक्छ । तर एउटा प्रमुख कुरा पनि ध्यान दिनु पर्दछ कि प्रार्थना सिकाउने कुरा होइन । यो त स्वस्फूर्त रूपमा आफ्नै भाषामा, आफ्नै शैलीमा हुनुपर्छ । खप्टड बाबाको धर्म विज्ञान द्वितीय खण्डबाट प्रार्थना विषयका गूढ ज्ञानलाई सबैको लाभार्थ प्रस्तुत गरेका छौँ ।)*

प्रार्थना अनेक प्रकारका हुन्छन् । तथापि त्यसका प्रमुख दुई प्रकार छन्– एक व्यक्तिगत प्रार्थना र अर्को सामुहिक प्रार्थना । अथवा एक भगवान्सँग कुनै याचना गर्ने वा माग्ने प्रार्थना र दोस्रो भगवान्सँग केवल भगवान्कै लागि, भगवत्प्रेमकै लागि गरिने प्रार्थना । यस अन्तिम श्रेणीको प्रार्थनामा न कुनै माग छ, न त कुनै याचना छ, बरु अनेक भावहरूद्वारा प्रभुलाई अङ्गीकार गर्नु, प्रभुकै पुनीत चरणमा आफ्नो शरीर, मन र आत्माहरूलाई समर्पित गर्नुछ । बस, उनैमा रमण गर्नु, उनैमा अनुरक्त हुनु, उनैको प्रेमको रसास्वादन गर्नु, आफ्ना सम्पूर्ण जीवन व्यापारहरूलाई प्रभुमै केन्द्रित गरिराख्नु, कहिले पूजा-पाठ, स्तुतिगान गर्नु, कहिले धन्यवाद दिँदै कृतज्ञतापूर्वक नामस्मरण गर्नु, कहिले नाम कीर्तन गर्नु, कहिले हृदयको सरल, सच्चा निष्कपट उद्गार उनको अगाडि राख्नु, कहिले केवल प्रेमाश्रुहरूद्वारा नै उनलाई रिझाउनु, समस्त चराचर जगतलाई उनैको व्यक्त रूप सम्झेर उनको सेवा गर्नु, यही यस प्रार्थनाको क्रम हो । यसलाई 'आराधना' पनि भन्दछन् र यसको अर्को नाम हो 'उपासना' । प्रार्थना चाहे व्यक्तिगत होओस्, चाहे सामुहिक, चाहे कुनै लौकिक वस्तु वा सुखको प्राप्तिको लागि होओस्, चाहे केवल भगवद्प्रेमको लागि होओस्, प्रार्थना पनि त्यति नै बलवती हुनेछ । मानव मात्रको लागि व्यक्तिगत प्रार्थना त्यति नै आवश्यक छ, जति कुनै देश, समाज र राष्ट्रको लागि सामुहिक प्रार्थना । तर सामुहिक प्रार्थनामा सम्मिलित हुनुभन्दा पहिले सबैको लागि व्यक्तिगत प्रार्थना गर्नु आवश्यक छ किनभने यसबाट सामुहिक प्रार्थनामा बल मिल्छ र शक्ति उत्पन्न हुन्छ ।

व्यक्तिगत प्रार्थनामा हामी केवल आफ्नो श्रद्धा, प्रेम, भक्ति र प्रपत्तिको बलमा भगवान्को अनुसन्धान गर्छौं । तर सामुहिक प्रार्थनामा एकको अतिरिक्त अनेकको बल र अनुभवको लाभ हामीलाई प्राप्त हुन्छ जसबाट सामुहिक शक्ति प्राप्त हुन्छ र भक्तिभाव र प्रेम भावको एक अनौठो उल्लास उम्लेर आउँछ, यो जनसमुदायको हित चिन्तन, एकीकरण र सङ्घटनमा जादूजस्तै काम गर्छ । व्यक्तिगत प्रार्थना निर्जन एकान्त स्थानको चीज हो । यसमा तल्लीनता, एकाग्रता र शान्तिको

लेश मात्र पनि हुँदैन । अरूलाई दु:खी देखेर दु:खी हुनु, उसको कल्याण चाहनु, उसको लौकिक र पारलौकिक सुखको लागि उसलाई समुन्नत, पवित्र र सदाचारी बनाउनको लागि एवं भगवान्प्रति उसको अनुराग बढाउनको निम्ति प्रभुसँग विनय गर्नु अतिशय उपकारी र उपयोगी हुन्छ र यस्तो प्रार्थनाको उत्तर चाँडै मिल्छ । श्रद्धावान्को भावले नै भगवान्लाई वशमा लिन सक्छ। अर्काका लागि प्रार्थना गर्नेहरूमा भगवान्को कृपा विशेष हुन्छ र त्यसका सबै

आवश्यकता हुन्छ । जबसम्म मन स्थिर हुँदैन, जबसम्म चित्त उताउति जान छाड्दैन, भगवान्को ध्यान हृदयमा जम्दैन, भगवान्प्रति सच्चा भाव जाग्दैन, जबसम्म आतुरता र विह्वलता हुँदैन, सच्चा र सफा हृदय हुँदैन, आर्त र दु:खी चित्त हुँदैन, प्रणयपूर्वक भगवान्को अनुसन्धान हुँदैन, सच्चा श्रद्धा, प्रेम र लगन हुँदैन, तबसम्म हाम्रो प्रार्थनामा बल आउँदैन । व्यक्तिगत प्रार्थना ती बिना पूर्णरूपमा फलदायक हुँदैन। प्रियतम प्रभुमा दिल लगाउन र आफ्नो हृदयको भाव उनमा प्रकट गर्नको लागि पनि निरन्तर एकान्त स्थान अति आवश्यक छ। एक्लै हुँदा लाज, संकोच हुँदैन, दिल खोजेर प्रियतम प्रभुसँग कुरा गर्न सकिन्छ। आफ्नो दीनता, तन्मयता, आत्मनिवेदनको परिचय बढी स्वतन्त्र भएर र प्रेमपूर्वक राम्ररी दिन सकिन्छ, जुन जनसमूहको अगाडि सम्भव हुँदैन ।

चित्त, मन, हृदय, वचन र कर्म प्रभुसँग यसप्रकार मिलून्, बेकामका सोचविचार, फिक्री अथवा निष्फल मनन नहोऊन् र प्रभुबाहेक अरू कुनै वस्तु रहने ठाउँ नहोओस् तथा सरलता र आर्ततापूर्वक दिल खोलेर प्रार्थना गरियोस् त कुनै यस्तो कार्य छैन जो सिद्ध हुन नसकोस् । यस्तो व्यक्तिगत प्रार्थना आफ्नै लागि पनि हुन सक्छ र अर्काको लागि पनि हुन सक्छ । आफ्नो अपेक्षा अर्काको लागि गरिने प्रार्थना अझ बेश हो। यस्तो प्रार्थना चाँडै सुनिन्छ किनभने त्यसमा स्वार्थको

कामनाहरूको पूर्ति नमागीकन नै हुन्छ ।

यो अनुभवसिद्ध छ र मनोवैज्ञानिक रूपले पनि सिद्ध छ– मानिस कुनै कुरा सोच्तछ भने उसको त्यो भाव नष्ट हुँदैन, अव्यक्त रूपले आकाश मण्डलमा व्याप्त हुन पुग्छ र त्यो पुन: व्यक्त रूपबाट वाणीद्वारा उच्चरित हुन्छ र साथै क्रियाहरूद्वारा कार्य रूपमा मूर्तिमान् भएर प्रकट हुन्छन् । यदि यस्ता शुद्ध, सात्त्विक कल्याणकारी भाव, सात्त्विक, सदाभारी पुण्यवान् व्यक्ति वा बहुसङ्ख्यक महापुरुषहरू, व्यक्तिहरू र समुदायका शुद्ध अन्त:करणबाट उठे भने उनीहरूका ती भाव अझ प्रबल र शक्तिशाली रूपले वायुमण्डलमा व्याप्त हुन्छन् । यस्ता भावहरूको सम्मिश्रणद्वारा एक प्रबल विद्युच्छक्ति उत्पन्न हुन्छ, जसद्वारा जगत्को उपकार तथा कल्याण हुन्छ। अल्पसंस्कारी जीव पनि यस्ता वातावरणका प्रभावद्वारा प्रभावित हुन्छन्, वायुमण्डलबाट ती भावहरू खिचेर लिन्छन् र सुख, शान्ति र आनन्दको अनुभव गर्छन् । महापुरुष र जीवन्मुक्त महात्मा यस्ता कल्याणकारी विचारहरूलाई आफ्नो व्यक्तिगत प्रार्थनाद्वारा जगत्को उपकारार्थ छाडिरहेका हुन्छन् जसबाट समाज एवं देशको मात्र होइन, विश्वभरकै कल्याण हुन्छ। यसैकारण एकान्तवासी महात्मा टाढा रहेता पनि आफ्ना शुभ-कामनाहरू, हितचिन्तन तथा शुभ-विचारहरूद्वारा समाज, देश तथा राष्ट्र र

विश्वभरिको कल्याण गर्छन् । हाम्रा महापुरुषहरूका जो व्यक्तिगत प्रार्थनाहरू थिए, ती सामुहिक कल्याण, हितचिन्तन र परोपकारका भावहरूद्वारा प्रेरित रहन्थे । हाम्रा धर्मग्रन्थहरूमा यस्ता अनेक प्रार्थनाहरू पाइन्छन्, जो प्राणी मात्रलाई स्वच्छ, निर्मल बनाउने शुभ आकांक्षाले सम्पूर्ण समाजलाई सुखी बनाउने इच्छाद्वारा गरिएका हुन्छन् ।

प्रार्थनाको मनोवैज्ञानिक आधार गुप्त मन नै हो । मनोविज्ञानको दृष्टिले प्रार्थना, एक प्रकारको आत्मसङ्केत अथवा आत्मसूचना (Auto–Suggestion) हुन्छ । जीवनमा सङ्केत र सूचनाहरू हामीलाई परिचालित गर्छन् । उदाहरणको लागि तपाईं मन खिन्न भएर बाटोमा हिँडिरहनुभएको छ । अकस्मात् कुनै प्रफुल्लवदन मित्रसँग भेट भयो । उनको मुस्कान तथा उत्साहवर्धक वचनले तपाईंमा बलप्रद औषधिको काम गर्छ । यस्तै नै एक विशेष प्रकारका सूचनाहरू तपाईंले गरेका प्रार्थनाहरू पनि हुन्छन् । तपाईंका आफ्नै भावनाहरू, आफ्नै मुखबाट निस्केका शब्दसमूह चेतन अथवा गुप्त मनमा पुगेर मानसिक स्तरको एक भाग बनिदिन्छन् । जुन विचारको प्रभाव जति शीघ्र गुप्त मनमा पुऱ्याउन सकिन्छ त्यति नै शीघ्र प्रार्थना फलवती हुन्छ । प्रार्थना गर्दाखेरि प्रकट मनको अवस्था अचल एवं केही निष्क्रियजस्तो भएर मन्द हुन जान्छ । त्यसकारण त्यसबेला एकाग्रता हुनाले सूचनाहरूको प्रवाह सीधै गुप्त मनमा प्रवेश गर्छ । हाम्रा अन्तरका अचेतन वृत्तिहरू ती सूचनाहरूलाई ग्रहण गर्छन्, विरोधी भावनाहरू उठ्दैनन् । प्रार्थनाकालमा शरीर शिथिल हुन्छ र जति हाम्रो तन्मयता एवं विश्वास हुन्छ त्यति नै बढ्ता हामीलाई आन्तरिक प्रवृत्तिसम्म पुग्न तथा आफ्नो इष्टभावनाको बीजारोपण गर्न सुगमता हुन्छ । जतिपटक मनलाई शिथिल पारेर आँखा चिम्लेर सबै विरोधी विचारहरू हटाएर हामी प्रार्थनामा चित्त एकाग्र गर्नेछौं, त्यति नै पटक परमात्माको परमपावन संस्पर्शद्वारा रौं रौंमा पवित्रताको संचार हुनेछ । यस्तै ढङ्गले रोगी स्वास्थ्यको प्रार्थना गरेर रोगमुक्त तथा स्वस्थ हुन सक्छ ।

शब्दहरूलाई रटेर सुगाले झैं दोहोऱ्याउनु प्रार्थना होइन । यो त एक प्रकारको अभिनय हो । प्रार्थना त आत्मविश्वासबाट सञ्चित हुनुपर्छ । विश्वास फलदायक हुन्छ । तपाईंको प्रार्थनाका शब्दहरूमा जति श्रद्धा हुनेछ, विरोधी भावनाहरूको जति त्यसमा कमी हुनेछ, विश्वासद्वारा त्यो जति ओतप्रोत हुनेछ, सर्वशक्तिमान् परब्रह्मसित त्यति नै तादात्म्य स्थापित हुन सक्नेछ । भित्रबाट प्रेरित सच्चा प्रार्थना स्वसङ्केत (Auto–Suggestion) को एक यस्तो पद्धति हो, जसद्वारा हामी स्वयं आफ्नो गुह्य मनले आफ्नै शक्तिको महासागर खोलिदिन्छौं । ध्यान रहोस्– हाम्रो प्रार्थना आशावादी होओस् । यसमा हाम्रो परम कल्याण छ । हामीले प्रार्थना गर्नुपर्छ– 'हे परमेश्वर ! हजूर तेजपुञ्ज हुनुहुन्छ, हजूर बुद्धिका सागर हुनुहुन्छ, शक्तिका अपार समुद्र हुनुहुन्छ, हामीलाई पनि तेजले परिपूर्ण पारिदिनुहोस्, हामीलाई शुद्ध बुद्धि दिनुहोस्, शक्तिले हाम्रा अङ्ग-अङ्ग भरिदिनुहोस्, गद्गद् स्वरले भन्नू– हे दयामय प्रभो ! अब ढिला नगर्नोस्, जीवन छोटो छ ।

आफ्नो दिव्य ज्योतिद्वारा यस जीवनमा दिव्य प्रकाश भरिदिनुहोस् । यसलाई समुज्ज्वल बनाएर आफ्नो मन्दिरमा लैजानुहोस्, सधैंका लागि उहीं बस्न स्थान दिएर कृतार्थ गर्नुहोस् । यसप्रकार प्रार्थनाका अरू रूप पनि हुन सक्छन् । तर सावधान ! प्रार्थनामा कुनै निकृष्ट शब्द वा भाव नरहोस् । निकृष्ट शब्द वा भाव घातक शत्रु हो । हाम्रो प्रार्थना जति सुन्दर श्रद्धा तथा विश्वासले युक्त हुनेछ, त्यति नै सृजनात्मक कार्य गर्नमा समर्थ हुनेछ । यसै मनोवैज्ञानिक आधारमा गायत्री मन्त्रको विधान छ, जसको अर्थ हो– 'हामी त्यस सुखस्वरूप, श्रेष्ठ, तेजस्वी, पापनाशक, प्रणवस्वरूप परब्रह्मलाई धारण गर्छौं, जो हाम्रो बुद्धिलाई सन्मार्गतर्फ लगाउने प्रेरणा दिन्छन् ।'

१) भगवान्सँग हामी जुन वस्तुको लागि प्रार्थना गर्छौं, त्यस वस्तुको तीब्र इच्छा हाम्रो मनमा हुन्छ, यदि त्यस बिना हाम्रो काम कुनै अरू चीजले पनि चल्छ भन्ने देखिएमा सम्झनुपर्छ– त्यस वस्तुप्रति हाम्रो तीब्र चाहना छैन ।

२) त्यो वस्तु पाउनु नै पर्छ भन्ने दृढ निश्चय छ । यदि वस्तु प्राप्तिमा संलग्न रहेर क्रमश: उत्साह शिथिल हुन्छ भने मान्नुपर्छ– निश्चय दृढ छैन ।

३) पूर्ण धैर्य होओस्, प्रार्थना शुरु गरेपछि फल प्रकट हुने समयसम्म अधीरताको छाया पनि मनमा नआओस्, साथै फल प्रकट भयो, भएन हुर्ने प्रवृत्ति नआओस्, बीज रोपेर जल सेचन गरी तुरुन्त उखेलेर हेर्नु उचित हुँदैन– अङ्कुर पलायो कि पलाएन भनेर ।

४) प्रार्थनाको तार (प्रवाह) नटुटोस् । फल प्रकट हुने समयसम्म यथासाध्य सधैँ तत्परतापूर्ण रूपले प्रार्थना जारी रहोस् ।

५) यो अखण्ड, अविचल विश्वास मनमा निरन्तर जागरुक रहोस्– प्रभु यहाँ अवश्य हुनुहुन्छ, यो वस्तु हामीलाई उहाँमा दिन सक्नुहुन्छ, जोसुकै उहाँका अगाडि जुनसुकै वस्तुका लागि उपस्थित भए पनि तिनलाई त्यो वस्तु उहाँ अवश्य दिनुहुन्छ । हामीलाई पनि उहाँ दिनुहुन्छ । हामीलाई यो वस्तु अवश्य मिल्नेछ, यसमा अलिकति पनि शंका छैन ।

६) तर प्रार्थनाको समयमा प्रभुसमक्ष त्यस वस्तुको लागि रुनु आवश्यक छैन । प्रार्थनाको रूप त हुनुपर्छ– प्रभुसँग हृदयको मिलन, हृदयको एकीकरण, प्रभुका रूपमा तन्मयता, अंश अंशीमा मिल्नु, प्रभुका ऐश्वर्य, समग्र वीर्य, समग्र यश, समग्र श्री, समग्र ज्ञान र समग्र वैराग्यमा आफ्नो सत्ता बिलाउनु । यस मिलनको आनुसङ्गिक परिणाम हुनेछ– इच्छाको पूर्ति, इष्ट वस्तुको प्राप्ति । कल्पना गरौँ– भयानक खटिरो आयो, त्यसमा पीप भरियो, वेदनाले प्राण व्याकुल भयो । यसबाट त्राण पाउन हामी प्रभुसँग प्रार्थना गर्न गयौँ । त्यसबेला मानसिक आँखाको अगाडि आफ्नो खटिराको विकराल रूप प्रभुका सामु राख्नु प्रार्थना होइन, यस्तो गर्नु प्रार्थना होइन, यस्तो गर्नु प्रार्थना पद्धतिबाट टाढा जानु हो । हामीले त निरामय स्वरूपको चिन्तन गर्नुपर्छ, जसमा विकृति छैन, अभाव, दुर्गन्ध एवं मलीनता छैन र अनिन्द्य सुन्दरता छ । त्यो सर्वथा सबैतिरबाट पूर्ण छ ।

जो अनन्त सौरभको निवास हुनुहुन्छ र परम

दिव्य हुनुहुन्छ, उहाँको निरामय, सुन्दर, दिव्य ज्योतिर्मय सत्ता हाम्रा शरीरका अणु-अणुमा व्याप्त छ । उसमा यस्तै दृढ भावना हामीले बारम्बार राख्नुपर्छ । प्रभुद्वारा अनुप्राणित हाम्रा यस शरीरका अणु-अणु रोगले शून्य, मनोहर, सुन्दर, नित्यपूर्ण, सुवासयुक्त एवं चिन्मय ज्योतिले उद्‌भाषित भइरहेछन् । यस्तो अनुभव गरेर बारम्बार अभ्यास गर्नू । खटिराको पीडा हामी बिर्सन्छौँ । त्यसका ठाउँमा अविकारी, सम्पूर्ण, नित्य रुचिर, सुरभिमय, मरमोज्ज्वल प्रभुको सत्ता व्यक्त हुन थाल्छ ! यस्तो चेष्टा हामीले गर्नुपर्छ । विश्वास र लगनका साथ यस्तो धारणा राखेपछि यस्तो भावना हुनु कठिन छैन । भावना दृढ भएपछि प्रभुको दिव्य चमत्कार त्यस गलित शरीरमा, खटिराले व्याकुल छालामा हामीले चालै नपाउने गरी प्रकट हुनेछ, यो कोरा कल्पना होइन, ध्रुवसत्य हो । नोबेल पुरस्कार विजेता संसार प्रसिद्ध वैज्ञानिक एवं डाक्टर अलेक्सिस क्यारेलले भनेका छन्– उनले स्वयं आँखाले देखे– एक मात्र केवल प्रार्थनाद्वारा मुखको घाउ, शरीरका अन्य घाउ, क्यान्सर, मूत्राशयका रोग र यक्ष्मा आदि रोगहरूद्वारा पीडित रोगीहरूको रोग निर्मूल भएको छ ।

लौ, रोगबाट मुक्त हुने कुरा त ठीक छ, हामीलाई त धन चाहिन्छ, घरमा युवती कन्या छिन्, तिनको विवाह गर्नुछ, पेटभरि खानका लागि अन्न छैन । शरीर ढाक्नका लागि पर्याप्त वस्त्र छैन । के भगवत्प्रार्थना मात्रले हामीलाई धन मिल्नेछ ? अवश्य मिल्नेछ, तर प्रार्थना ठीक हुनुपर्छ, अन्य आवश्यक कुराका साथ साथै प्रार्थनाको बेला आफ्नो दरिद्रताको भावना, आफ्नो कमजोर स्थिति बिर्सिदिनुपर्दछ । त्यसका ठाउँमा प्रभुको सर्वसम्पन्न रूप, अनन्त श्रीसम्पन्न सत्ताको सम्झना गर्नू, त्यसमा आफ्नो मन डुबाउनू, यो अनन्त आकाश, अपरिसीम सागर, विस्तीर्ण भूभाग, उच्च पर्वतमाला, नदी, निर्झर, सरोवर, वन, उपवन, पशुपंक्षी, कीटपतंग, भृङ्ग, सुन, चाँदी, हीरा, मोती, नीलम, पन्ना आदि अगणित वैभवहरूको निर्माण गर्ने प्रभु हामीभित्र विद्यमान हुनुहुन्छ । उहाँमै आफ्नो मनलाई लीन गरौँ । यस्तो भावना राखौँ, प्रभुको अनन्त वैभव चारैतिर फैलिएको छ, त्यसमा हाम्रो अधिकार छ, किनभने हामी उहाँकै हौँ । भगवान्‌का आँखाद्वारा यो स्पष्ट अनुभव गरौँ– प्रभुको अनन्त विभूति हामीलाई त प्राप्त नै छ, हाम्रा लागि त कुनै अभावको कल्पनै छैन । विश्वासपूर्वक वास्तवमा हामी यस्तो दृढता राख्छौँ भने निश्चित छ– हामीलाई आवश्यक धनको व्यवस्था प्रभुको विधानले हुनेछ । सारांश यो हो कि हामी जुन वस्तु चाहन्छौँ, त्यसको अभावका तर्फबाट वृत्तिहरू हटाएर, त्यो वस्तु जुन प्रभुमा पूर्ण रूपबाट नित्य वर्तमान छ, त्यसमा केन्द्रित गर्नू । हामी 'फलानु वस्तु होइनौँ, फलानु होइन' यसप्रकारको चिन्तनबाट रोकिएर जहाँ हाम्रो इच्छित वस्तु पूर्णरूपमा सधैँ अवस्थित छ, त्यसको चिन्तन गर्नू ।

७) यो कुरा ध्यानमा राख्नुपर्छ कि चिन्तनबाट कुनै वस्तुको निर्माण गर्ने शक्ति हामीभित्र पनि छ ।

किनभने हामी विश्वस्रष्टाका अंश हौं । यदि प्रार्थना समयमा हामी अभावको, मलीनताको अनुभव गर्छौं, चिन्तन गर्छौं– 'नाथ ! हेर्नोस्, यस वस्तुको अभावमा मलाई कति कष्ट भइरहेछ । हेत्तेरीमेरो कस्तो गए गुज्रेको अवस्था छ ।' यिनै भावहरूको आवृत्ति गरिरहनाले अभावजन्य व्यथा र पतनका मूर्तिहरूकै निर्माण हुनेछ । यसका विपरीत हामीले प्रार्थना समयमा यस्तो सोचौं– 'हामीलाई सबै कुरा छन्, सुन्दर छन्, नाथ ! हजूरको कृपाले अति आनन्दमा छु, प्रतिक्षण माथि उठिरहेछु ।' यस्तो विचारको समयमा महामहिम प्रभुसँग हाम्रो सम्पर्क त हुन्छ नै, साथै इष्ट प्राप्तिजन्य सुखको उत्थानका शुभ मूर्तिहरू पनि निर्माण भइरहन्छन् । यी हाम्रा लागि सहायक बनिरहन्छन् । करुणासागर भगवान्का तर्फबाट जुन कृपाका लहरहरू हामीतर्फ आइरहेछन्, उनीहरूलाई यी मूर्तिहरू बडो वेगले आकर्षित गर्न थाल्छन्, हेर्दाहेर्दै हाम्रा शुभ विचार भगवान्का मङ्गलमय विधानमा जोडिन्छन् र फेरि हाम्रा लागि बाहिर एक शुभले पूर्ण संसार मूर्त हुन्छ । तुरुन्त नै ती प्रतिकूल परिस्थितिहरू हट्छन् । त्यसैले आफूभित्रको निर्माणको शक्तिलाई पनि प्रार्थनामा प्रयोग गर्नुपर्छ ।

८) प्रार्थना अर्काको हितविपरित हुनुहुँदैन र आफ्नो अपवित्र इच्छामा सुधार गरेर त्यसलाई प्रभुसँग मिलाउन लायक पवित्र बनाएर प्रार्थना गर्नुपर्छ । तब अवश्य सफलता मिल्नेछ ।

९) मनबाट यो धारणा निकालिदेऊ– प्रभु हाम्रो प्रार्थनाद्वारा दबेर हाम्रो इच्छापूर्तिका लागि खुशामदले राजी भएर लौकिक पुरुषले कुनै काम गरिदिए जस्तै प्रभु पनि आफ्नो परम मङ्गलमय विधानमा हेरफेर गरिदिनुहुन्छ । प्रभुको मङ्गलमय विधान त निश्चित छ, अनादिकालदेखि निश्चित क्रमले क्रियाशील छ । अनन्तकालसम्म निश्चित क्रमले क्रियाशील रहनेछ । यसमा हेरफेर प्राय: हुँदैन, गरिँदैन । हेरफेर त हाम्रो इच्छामा हुनुपर्छ । हाम्रो इच्छा भगवान्को मङ्गलमय विधान अनुकूल हुनु आवश्यक छ । तब मात्र त्यस इच्छाको पूर्ति सम्भव छ, अन्यथा छैन ।

१०) प्रार्थनाभन्दा पूर्व हामी आफ्नो इच्छित वस्तुलाई केही समयको लागि प्रसन्न चित्तले पूर्ण एकाग्र भएर स्मरण गर्छौं, फेरि आफ्नो भाषामा भगवान्को तत्सम्बन्धी रुपको निरुपण एवं मनन तथा भावना आरम्भ गर्छौं । कसैबाट सिकेको भाषामा प्रार्थना गरेपछि त्यसमा प्राय: केही न केही कृत्रिमता आइहाल्छ, जुन प्रभुसँग हृदयको शीघ्र संयोग हुनमा आवरणजस्तै काम गर्न थाल्छ । यसकारण आफ्नै स्वाभाविक भाषाको प्रयोग नै श्रेष्ठ छ ।

११) यस इच्छापूर्तिको अवधि र पूर्तिको प्रकार, प्रभुको लागि निर्धारित नगर्नू । हाम्रो त्यो इच्छित वस्तु कहिले मिल्नेछ, जुन किसिमले मिल्नेछ, यी दुवै कुरालाई हामी प्रभुकै मङ्गलमय इच्छामा छाडिदेऔं ।

१२) जहाँसम्म सम्भव हुन्छ हामी बढीभन्दा बढी प्रार्थना गर्ने गरौं, तर यो कुरा प्रभुबाहेक अरू कसैमा प्रकट नहोओस् ।

१३) सधैं यो विचार गर्दै गर्नुपर्छ– 'म आफ्नो जीवन र व्यवहार प्रेमपूर्वक परमात्मालाई समर्पण गर्छु, मेरो लागि जे जे उत्तम छ, त्यही हुनेछ ।'

१४) परमात्मा प्रेमस्वरुप हुनुहुन्छ । उहाँको प्रेम ममा प्रकाशित हुन्छ र मलाई निर्देश दिन्छ । यस प्रेममा लवलीन भएर म पूर्णस्वरुप बनूँ र सबै प्रकारका चिन्ताहरुबाट मुक्त होऊँ ।

१५) मेरो लागि भयको कुनै कारण छैन, परमात्मा सर्वशुभ र सर्वेश्वर हुनुहुन्छ । उहाँ नै मेरा ज्ञानदाता र मार्गदर्शक हुनुहुन्छ ।

उपर्युक्त कुराहरुमा ध्यान राखेर इच्छित वस्तु प्राप्त गर्न हामी प्रार्थना गर्छौं भने तत्काल लाभ हामीलाई हुन्छ नै, मनले चाहेको वस्तु हामीलाई मिल्ने मात्र होइन, क्रमश: हाम्रा हृदय, मन र प्राणमा प्रभुको दिव्य ज्योति भरिन पनि थाल्छ । यी आलोक बनेर उठ्छन् । यो आलोकले एकदिन हामीलाई आफ्नो भित्र सधैं रहने प्रभुको मन्दिरको दर्शन गराइदिन्छ । बस, यहीँबाट हाम्रो साँचो प्रार्थना भगवान्सँग भगवान्को लागि, भगवत्प्रेमको लागि आरम्भ हुन्छ । फेरि हाम्रा मनका सम्पूर्ण वृत्तिहरु सबैतर्फबाट समेटिएर प्रभुको दिव्य मन्दिरतर्फ केन्द्रित हुन जान्छन् । जय गुरुदेव !

# नाथ सम्प्रदायमा चौरासीनाथ

नाथ सम्प्रदायका चौरासी सिद्धहरूको चर्चा गर्ने क्रममा यसअन्तर्गत पर्ने सिद्धहरूको बारेमा चर्चा गर्दै आइरहेका छौँ। चौरासी सिद्धहरू कुनै संघ, सम्प्रदाय, धर्मविशेषभन्दा पनि योग्यता, क्षमताका आधारमा हुने कुरालाई नकार्न सकिँदैन। विद्वान् लेखकहरूले चौरासी सिद्धहरूको चर्चा पूर्ण ऐतिहासिक प्रमाणको आधारमा गर्न सकेको पाइँदैन । सामान्य जानकारीको आधारमा एवं यथेष्ट प्रमाणको अभावमा चौरासी सिद्धहरूका नामहरू प्रकाशमा ल्याउनु विवादास्पद हुने कुरामा कुनै शङ्का छैन। यही विवादको घेराभित्र पनि विभिन्न चौरासी सिद्धहरूको सूची पाइन्छ। तिब्बतमा बढी प्रचारका साथ, बढी श्रद्धाका साथ चौरासी सिद्धहरूलाई लिइएको पाइन्छ । बौद्ध धर्मका अनुयायीहरूले पनि चौरासी सिद्धहरूलाई विशिष्ट पुजनहरूमा स्थापित गरी उच्च आदरका साथ पुजन गर्ने गरेको पाइन्छ। भगवान् बुद्धका दर्शनहरू, उपदेशहरू एवं बौद्धधर्मका धेरै कुराहरू, सिद्धान्तहरू गोरक्ष सम्प्रदायसँग, नाथ सम्प्रदायसँग मेल खाएको पाउँछौँ । सूक्ष्मताका मूल गुरुको रूपमा भगवान् बुद्धले श्री गुरु शिव गोरक्षलाई मानेकाले, उहाँकै निर्देशनअनुसार अगाडि बढेकाले पनि एकरूपता आउनु कुनै नौलो कुरा होइन। वस्तुत: तार्किक दृष्टिले धर्मका विविध रूप देखिए पनि तात्त्विक हिसाबले कुनै फरक पाइँदैन । जुनसुकै सिद्धको रूपमा अर्थात् भगवान्को अवतारको रूपमा अवतरित भएर कार्य गरे पनि उद्देश्य र लक्ष्य एउटै भएको पाइन्छ । सत्यताका लागि अडान लिने सद्गुरुलाई आत्मसात् गर्ने, सत्यता र सद्गुरुलाई आत्मसात् गर्नेहरू नै सिद्ध हुन्, गोरक्ष सम्प्रदायका संवाहक हुन्, नाथ सम्प्रदायका गौरवशाली योगीहरू हुन् ।

'सस्क्य विहार'को सूचीमा प्राप्त चौरासी सिद्धहरूको नामावली यसप्रकार रहेको छ-

१. लुईपा
२. लीलापा
३. विरूपा
४. डोबिपा
५. शबरपा
६. सरहपा

७. कंकालिपा (कंकरिपा)
८. मीनपा
९. गोरक्षपा
१०. चौरगिपा
११. बीणापा
१२. शान्तिपा, रत्नाकर, शान्ति
१३. ततिपा
१४. चमरिपा
१५. खड्गपा
१६. नागार्जुन
१७. कण्हपा
१८. कर्णरिपा (आर्यदेव)
१९. थगनपा
२०. नारोपा
२१. शालिपा, शीलपा, श्रृंगालीपाद
२२. तिलोपा
२३. क्षत्रपा
२४. भद्रपा
२५. दोखधिपा (याद्धिखण्डिपा)
२६. अजोगिनपा
२७. कालपा
२८. धोंभिपा
२९. कंकणपा
३०. कभरिपा (कंबलपा)
३१. डेंगिपा
३२. भदोपा
३३. तधेपा (तंतेपा)
३४. कुकुरिपा
३५. कुचिपा (कुसलिपा)
३६. धर्मपा
३७. महिपा (महिलपा)
३८. अंचितिपा
३९. भलहपा (भवपा)
४०. नलिनपा
४१. भुसुकुपा
४२. इन्द्रभूति
४३. मेकोपा
४४. कुठालिपा
४५. कर्मरिपा (कंपरिपा)
४६. जालन्धरपा
४७. राहुलपा
४८. धर्वरिपा (धर्मरिपा)
४९. धोकरिपा
५०. मेदनीपा (ठालीपार)
५१. पंकजपा
५२. घंटापा (ब्रज)
५३. जोगिपा (अजोगिपा)
६५४. चेलुकुपा
५५. गुडंरिया (गोरुर)
५६. लुचिकपा
५७. निर्गुणपा
५८. जयानन्त
५९. चर्पटीपा (पचरिपा)
६०. चपंकपा
६१. भिखनपा
६२. भलिपा
६३. कुभरिपा
६४. वचरिपा (अजपालिपा)
६५. मणिभद्रा (यागिनी)
६६. मेखलपा (योगिनी)
६७. कनखलापा
६८. कलकलपा
६९. कंतालीपा (कथालिपा)
७०. घहुलिपा (धहुरिपा)
७१. उधालिपा (उधरिपा)
७२. कपालपा (धहुरिपा)
७३. किलपा
७४. सागरपा
७५. सर्वभक्षपा
७६. नागबोधिपा
७७. दाखिकपा
७८. पुतुलिपा
७९. पनहपा (उपानहपा)
८०. कोकालिपा

८१. अनंगपा
८२. लक्ष्मीकरा
८३. समुदपा
८४. भलिपा (व्यालिपा) ।

यसरी चौरासी सिद्धहरूको यस सूचीमा नाथ शब्द जोडिएको पाइँदैन । धेरैजसो यी नामका पछाडि 'पा' वा 'पाद' उपाधि जोडिएको पाइन्छ । सिद्धहरूको सूचीको रूपमा उल्लेख गरिएका यी व्यक्तिहरू वास्तवमै चौरासी सिद्धहरू हुन् भन्ने कुरामा विद्वान्हरू एकमत देखिदैनन् । तैपनि कुनै न कुनै रूपबाट यी व्यक्तित्वहरू त्यस समयमा स्थापित भएको भने पाइन्छ ।

वास्तवमा चौरासी सिद्धहरू को को, कुन कुन ठाउँमा कसरी स्थापित हुनु भयो, कुन उद्देश्यका लागि कुन कुन सिद्धहरूले समाजमा के के भूमिका निर्वाह गर्नुभयो भन्ने कुरा यकीनका साथ भन्न गाह्रो छ । तैपनि साधनात्मक रूपबाट उच्चता हासिल गर्नुभएका योगीहरूले आ-आफ्नो स्थानमा गर्नुभएका विभिन्न योगदानहरू चर्चाभन्दा पर छन् भन्दा फरक नपर्ला । योगीहरूले समाजकै लागि आफ्नो सम्पूर्ण जीवन समर्पित गर्ने हुनाले, कार्य गर्ने हुनाले उहाँहरूले गरेका योगदानहरू कुनै कागज, ग्रन्थमा उल्लेख हुनुपर्छ भन्ने कुनै आवश्यक छैन । उहाँहरूले गरेका कार्यहरू समाजमा सधैँ ऐतिहासिकरूपमा स्वर्णाक्षरले लेखिएको हुन्छ । तैपनि विभिन्न ग्रन्थहरूमा विभिन्न नामहरू समावेश गरिएका छन् जसअन्तर्गत चौरासी सिद्धहरूको नामावली यहाँ प्रस्तुत गरिएको छ ।

१. आदिकुमारी
२. कालाङ्ग
३. गौराङ्ग
४. गोरक्ष
५. चौरङ्गी
६. चर्पटी
७. श्रृङ्गी
८. अचल
९. मीन
१०. मत्स्येन्द्र
११. सजाई
१२. कपिल
१३. केणेरी
१४. कन्थडी
१५. ब्रह्मानन्द
१६. गोविन्द
१७. अचलेश्वर
१८. बालगुणहाई
१९. विरवङ्क
२०. सास्वताई
२१. सागरगन्ध
२२. बुद्धाइ
२३. भुताई
२४. कुण्डली
२५. कम्बली
२६. मण्डुकिपाव
२७. जालन्धर
२८. श्रृङ्गारिपाव
२९. कानिपाव
३०. नचिकेत
३१. विचारनाथ
३२. धुर्मनाथ
३३. वनखण्डी
३४. हलिपाव
३५. नन्दाइ
३६. अमराइ
३७. तनुकुब्ज
३८. अगोचर
३९. नागार्जुन
४०. सनक
४१. सनन्दन
४२. सनातन
४३. सनतकुमार
४४. भग्नपात्र
४५. धामक
४६. धूमक
४७. खेचर
४८. भूचर
४९. शिवगोस्वामी
५०. लोहाट
५१. अन्जाइपाव
५२. अवघट
५३. चर्मगोस्वामी
५४. गावसिद्ध
५५. सौरी
५६. भ्रमर
५७. चन्देरी
५८. अचली
५९. विशसंखा
६०. विलाप
६१. पिलपा
६२. मुक्ताइ
६३. पहूपना
६४. चाल
६५. चर्मरालव
६६. मालकी
६७. घोडाचोली
६८. प्रकटीपाव
६९. लोहा
७०. गुणिहर्ष
७१. वारिपाव
७२. अस्थिपाव
७३. सुत्रदण्ड
७४. लोहपात्र
७५. नागेश
७६. कुलालिपाव
७७. कर्पटी
७८. कनकाइ
७९. हिमालय
८०. तुषकाइ
८१. बालानाथ
८२. मालाकार
८३. गिरिवरनाथ
८४. रामनाथ ।

# नवनाथको विकासक्रम

इतिहासमा हेर्ने हो भने हाम्रो समाजले नाथ योगीहरुलाई उच्च श्रद्धा, सम्मान दिएको पाइन्छ। उनीहरुले समाजलाई दिएको अतुलनीय योगदान, अनुकरणीय कार्यहरूले हाम्रो इतिहासलाई सधैँ जीवन्तता दिइरहेका छन्। नाथ योगीहरुमा पनि महानाथ गुरु गोरखनाथले दिनुभएका सिद्धान्तहरु, पद्धतिहरु, नाथ योगीहरुले गर्नुपर्ने योग, ध्यान, जप, तप, कर्तव्य, दायित्व आज हामी केवल ग्रन्थमा मात्र सीमित पाउछौं, उहाँको मूल सिद्धान्तलाई आत्मसात् गर्न नसक्नेहरु कान छेड्दैमा र बाहिरी भेषभूषा धारण गर्दैमा कदापि नाथ योगी हुन सक्दैनन्। जब व्यक्ति साधना, ध्यान अर्थात् तपस्यामा लाग्दै जान्छ, आत्मिक खोज अनुसन्धानमा अघि बढ्दै जान्छ, उसले विभिन्न चरणहरूलाई सफलतापूर्वक पार गर्दै गुरुको सान्निध्यमा रहेर उच्चतम स्थिति प्राप्त गर्छ, तब मात्र ऊ नाथ योगी हुनको लागि अधिकारी बन्न सक्दछ।

तर आजको समाजको विडम्बना यो छ कि बाहिरी देखावटी भेषभूषा, रहनसहन आदिले नाथ योगीहरुको रुपमा स्थापित गराउने चलन चल्दै आइरहेको छ जुन सरासर गलत हो। कुनै व्यक्ति कान चिर्दैमा मात्रै, कुण्डल धारण गर्दैमा मात्रै, नाद जनेउ धारण गर्दैमा मात्रै, भस्म धारण गर्दैमा नाथ योगी हुन सक्दैन। क्षमता र सामर्थ्यको अभावमा नाथ योगीहरुमा हुनुपर्ने वास्तविक गुण, वास्तविक व्यक्तित्वबिना कसैलाई पनि नाथ शब्दले सम्बोधन गर्न सकिँदैन, न त उनीहरुको नामको पछाडि वास्तविक नाथ नाम नै जोड्न सकिन्छ।

यसरी आध्यात्मिकताको उच्चतम विन्दुको रुपमा स्थापित एवं प्रतिष्ठित नाथ योगीहरुलाई हालको समाजले अवमूल्यन गरेको छ। उनीहरुको पहिचान समाजबाट लुकेको छ भने देखावटी, आडम्बरी र केवल नामका मात्रै नाथ योगीहरुको समाजमा बाहुल्यता रहेको छ। आफ्नो व्यक्तिगत स्वार्थपूर्ति एवं जीविकोपार्जनको माध्यमको रुपमा यस्तो अति प्रतिष्ठित र गरिमामय पदलाई प्रयोग गर्नु धृष्टतासिवाय केही हुँदैन।

यसैले आजको आवश्यकता भनेको तपस्यामा लागेर त्यो उच्चतम स्थिति प्राप्त गर्दै आफूलाई वास्तविकरुपमा सच्चा नाथ योगीको रुपमा स्थापित गर्नु हो न कि कान छेडेर, पहेँलो वस्त्र लगाएर मात्र नाथ योगीको रुपमा कहलाइनु। आजको समाजले सधैँ सजिलो र सुलभ उपाय एवं नक्कल गर्ने प्रविधि सिकिरहेको छ जसले गर्दा दुःख, संघर्ष गरेर केही कुरा प्राप्त गर्नुभन्दा केवल देखावटी र बाहिरी रुपमा नै आफूलाई उभ्याउनेतिर लागे।

यसरी वास्तविक नाथ योगीले दुख, कष्ट, संघर्ष गरेर बनाएको पहिचानलाई भजाएर नाथ योगीहरुको छविलाई धमिल्याइदिए। वास्तविकता सधै लुकेको हुन्छ भनेजस्तै नाथ योगीभित्र हुने वास्तविक गुणहरुलाई समाजले बुझ्न सकेन। यस्ता व्यक्तिहरुले समाजका मानिसहरूलाई अलमल्याउन सफल भए पनि कालान्तरमा नाथ योगीहरुको वास्तविकता समाजले अवश्य नै बुझ्नेछ। यसैले तपाईँ हामी पनि नाथ योगी भन्नासाथ बाहिरी भेषभूषमा नअल्मलिइकन व्यक्तिभित्रको क्षमता, सामर्थ्य एवं उच्चतालाई बुझ्ने प्रयास गर्दै वास्तविक नाथहरुको आशीर्वाद प्राप्त गरी जीवनलाई

**नवनाथको विकासक्रम**

उच्चतातर्फ लैजाऔं।

नाथ सम्प्रदायको उद्गम एवं विकासक्रमसम्बन्धी गूढतम रहस्यमयी कुरा आदरणीय पाठकवर्गलाई बुझ्न सजिलो होस् भनी छेउको चित्रमा सांकेतिकरूपमा चित्रण गर्ने प्रयास गरिएको छ। वास्तवमा भगवान् आदिनाथले नवनाथ रचना गर्ने क्रममा सृष्टिलाई सुव्यवस्थित पार्न सकियोस् भनी प्रथम नाथहरुमा ब्रह्मा, विष्णु, महेश्वरलगायतका देवी देवताहरुलाई समेटर नवनाथको निर्माण गर्नुभएको पाइन्छ। त्यस्तै आदिनाथ भगवान्का प्रिय शिष्यको रुपमा गुरु मत्स्येन्द्रनाथले कृपा, आशीर्वाद प्राप्त गर्नुभयो र नवनाथ निर्माण गरी आफू मूलनाथमा विराजमान हुनुभयो। त्यसपछि गुरु मत्स्येन्द्रनाथले आफूलाई समाधिमा जाने इच्छा भएपछि भगवान् शिव गोरक्ष आदिनाथको तपस्या गरी आफ्नो सम्पूर्ण कार्यभार सम्हाल्नलाई सहयोगीको रुपमा आइदिने वरदान माग्नुभयो। सोही अनुरुप स्वयं आदिनाथ भगवान् नै ज्योतिस्वरूपमा गुरु गोरखनाथको रूपमा आसीन भइ कार्य सम्हाल्नुभयो र नवनाथको रचना गरी सारा जगको कल्याण गर्नुभयो र गुरु-शिष्य परम्परालाई जीवन्तता दिँदै नाथ सम्प्रदायको व्यापक विकास र विस्तार गर्नुभयो।

महानतम नाथ योगीहरूको त्याग, तपस्या र संघर्षबाट सिर्जिएको नाथ योगीहरुको गौरवमय परम्परामा वास्तविक क्षमतावान् नाथहरुको अभावमा यस परम्पराले विभिन्न कालखण्डमा आफूलाई ज्योतिस्वरूपमा अर्थात् अज्ञात स्वरुपमा राखेको पाइन्छ भने विभिन्न कालखण्डमा प्रकटीकरण रुपमा समाजमा देखिई कार्य गरेको पाइन्छ। समयको आवश्यकताअनुरुप श्री शिव गोरक्षले रहस्यमय लीलाका साथ नाथ सम्प्रदायलाई आकुञ्चन र प्राकुञ्चन गरेको पाउछौं।

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौँ। आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ।*

# आफ्नो हात आफै हेरौं

## भाग्य रेखा

मानिसको जीवनमा सबै कुरा भए पनि भाग्यले साथ दिएन भने उसको पूरा जीवन नै व्यर्थमा जान्छ। मानिस चाहे भव्य व्यक्तित्वको धनी भए पनि, अथवा जतिसुकै उदार भए पनि, वा स्वास्थ्यको दृष्टिले उसमा सबै प्रकारका श्रेष्ठता छन् भने पनि भाग्यले साथ दिँदैन भने एक प्रकारले उसको जीवन निष्क्रिय हुन्छ। यस्तो भनाइ पनि छ कि भाग्यले साथ दिँदा माटो छुँदा पनि सुन बन्छ। यदि भाग्यले साथ दिँदैन भने सुनलाई छुँदा पनि त्यो माटो समान हुन जान्छ।

वास्तवमा जीवनमा भाग्यको महत्त्व सबैभन्दा अधिक मानिएको छ। त्यसैले हत्केलामा भाग्य रेखा वा प्रारब्ध रेखालाई बढी महत्त्व दिइएको पाइन्छ। अंग्रेजीमा भाग्य रेखालाई 'फेट लाइन' भनिन्छ। यो रेखा जति अधिक गहिरो, स्पष्ट र निर्दोष हुन्छ, उसको भाग्य त्यति नै श्रेष्ठ मानिन्छ। यदि मानिसको हत्केलामा सबै रेखा दूषित एवं कमजोर छन् भने पनि भाग्य रेखा अत्यन्तै श्रेष्ठ छ भने उसका सबै दुर्गुण लुक्छन् र ऊ जीवनमा पूर्ण प्रगति गर्न सक्षम हुन्छ भनेर ठोकुवा गर्न सकिन्छ। त्यसैले हस्तरेखा विशेषज्ञले हस्तरेखाको अध्ययन गर्दा भाग्यरेखाको सावधानीपूर्वक अध्ययन गर्नुपर्दछ।

सबै हत्केलामा भाग्य रेखा नदेखिन सक्छ। करिव पचास प्रतिशत हत्केलामा भाग्य रेखाको अभाव भएको पाइएको छ। तर यसको अर्थ यो भने पक्कै होइन कि जसको हत्केलामा भाग्य रेखा हुँदैन, ऊ भाग्यहीन हुन्छ। भनाइको तात्पर्य यो मात्रै हो कि भाग्य रेखाको अभावमा प्रयत्न गर्दा पनि मानिसलाई पूर्ण सफलता भने प्राप्त हुँदैन। भाग्य रेखा भएमा व्यक्तिले अलिकति मात्रै प्रयत्न र प्रयास गर्दा पनि

उसले कार्यलाई आफ्नो मनोनुकूल बनाउँछ ।

यस रेखालाई शनि रेखा पनि भनिन्छ किनकि यस रेखाको समाप्ति शनि पर्वतमा गएर हुन्छ । यो रेखा मानिसको हत्केलामा बेग्लाबेग्लै स्थानबाट प्रारम्भ भएको देखिए पनि यसको समाप्ति भने शनि पर्वतमै भएको देखिन्छ । त्यसकारण यसलाई शनि रेखा भनेर पनि चिनिन्छ ।

जुन हत्केलामा यो रेखा कमजोर हुन्छ वा यो रेखै हुँदैन, त्यस्ता व्यक्तिहरूको उन्नति त हुन्छ तर उनीहरूको उन्नतिमा उनीहरूका दाजुभाइ, सम्बन्धी वा नातेदारहरूको कुनै पनि प्रकारको सहयोग भने रहेको हुँदैन । उसले जे जति कार्य गर्दछ, स्वयंको प्रयत्नबाट नै गर्दछ । यस्ता मानिसहरूलाई न त समाजबाट नै कुनै प्रकारको सहयोग प्राप्त हुन्छ, न त परिवारबाट नै प्राप्त हुन्छ । जुन मानिसको हत्केलामा शनि रेखा हुँदैन र उसको जीवनमा जे जति कुराहरू देखिन्छन्, ती सबै उसका आफ्नै प्रयत्नबाट नै सम्भव भएको हो भनेर मान्न सकिन्छ ।

यस रेखाको माध्यमबाट मानिसका इच्छा, भावना तथा बौद्धिक एवं मानसिक स्तर तथा उसको क्षमताको अनुमान हुन्छ । भाग्य रेखाबाट मानिसले जीवनमा कति प्रगति गर्छ ? जीवनमा आर्थिक स्थिति कस्तो हुन्छ ? जीवनमा धन, मान, पद, प्रतिष्ठा आदि प्राप्त हुन सक्छ ? उसको जीवन तनावहरूबाट त भरिएको छैन ? यस्तो मानिसले आफ्नो जीवनमा यी बाधाहरूलाई पार गरेर सफलता पाउन सक्लान् ? यी सारा कुराहरू भाग्यरेखाको माध्यमबाट नै थाहा पाउन सकिन्छ ।

माझी औँलाको मूलमा शनि पर्वत हुन्छ । हत्केलाको कुनै पनि स्थानबाट प्रारम्भ भएर यो रेखाले शनि पर्वतलाई स्पर्श गर्छ भने त्यो भाग्य रेखा मानिन्छ । हत्केलाका भिन्नभिन्न स्थानबाट प्रारम्भ हुने हुनाले भाग्य रेखाको महत्त्व पनि भिन्नभिन्न हुन्छ । त्यसैले भाग्य रेखाको उद्गम तथा त्यसको समाप्ति दुवै बिन्दुहरूको राम्ररी सूक्ष्मतासँग अध्ययन गर्नुपर्दछ ।

यदि यो रेखा जहाँबाट प्रारम्भ भए पनि यो कुनै अन्य रेखाको सहारा लिएर शनि पर्वतमा पुगेको छ भने त नि:सन्देह यस्तो रेखा प्रबल भाग्यवर्द्धक एवं श्रेष्ठ मानिन्छ । तर भाग्य रेखा शनि पर्वतलाई पार गरेर माझी औँलाको पौरसम्म मात्रै पुग्न खोजेको देखिन्छ भने यस्तो रेखा दूषित मानिन्छ । भाग्य रेखाको उद्गम निम्न स्थानहरूबाट हुन सक्छ–

१. हत्केलामा भाग्य रेखा मणिबन्धको माथिबाट निस्केर अन्य रेखाहरूको सहारा लिएर शनि पर्वतसम्म पुग्छ,
२. यो रेखा जीवन रेखाको नजिकैबाट निस्केर शनि क्षेत्रमा पुगेको हुन्छ,
३. भाग्य रेखा शुक्र पर्वतबाट निस्केर शनि पर्वतसम्म पनि पुगेको देखिन्छ,
४. कहिले काहीँ यो रेखा मङ्गल पर्वतबाट पनि निस्केको देखिन्छ,
५. यस रेखा जीवन रेखालाई काटेर शनि पर्वतसम्म पुग्ने प्रयासमा पनि देखिन्छ,
६. केही हत्केलामा भाग्य रेखा राहु क्षेत्रबाट पनि निस्केको देखिन्छ,
७. भाग्य रेखाले हृदय रेखाबाट निस्केर शनि पर्वतलाई स्पर्श गरेको पनि देखिन्छ,
८. यो रेखा नेपच्यून क्षेत्रबाट प्रारम्भ भएर शनि पर्वतसम्म पुगेको हुन्छ,
९. केही हत्केलामा यो रेखा चन्द्र पर्वतबाट पनि निस्केको देखिन्छ,
१०. हर्षल क्षेत्रबाट पनि यस रेखाको प्रारम्भ देख्न सकिन्छ,
११. कैयौँपटक त यो रेखा मस्तिष्क रेखाबाट प्रारम्भ भएर शनि पर्वतसम्म गएको पनि हुन्छ ।

जय गुरुदेव !

# सर्पगन्धा

१६ औं शताब्दीतिर जर्मनका भौतिकशास्त्री एवं वनस्पतिविज्ञ राउओल्फले सर्पगन्धा पत्ता लगाएको भनिन्छ । सर्पगन्धाको उत्पत्तिस्थान भारतलाई मानिन्छ । विगत ४ हजार वर्ष अघिबाट नै औषधिमा यसको प्रयोग हुन थालेको थियो ।

**वानस्पतिक विवरण :**

नाम : रावोल्फिया सर्पेन्टिना (Rawolphia Serpentina)

नेपाली नाम : सर्पगन्धा, चाँद मरुवा

अंग्रेजी नाम : राबोल्फिया रुट्स, स्नेक रुट्स, सर्पेन्टाइन रुट्स, सर्पेन्टउड सर्पेन्टन ।

परिवार : अपोसाइनेसी (Apocynaceae)

सर्पगन्धालाई बहुउपयोगी एवं बहुगुणकारी, बहुवर्षीय, सदाबहार विरुवा मानिन्छ। यो साधारणतया ५०-९० से.मी. अग्लो खाले झाडी वर्गको वनस्पति हो। यस विरुवाको काण्डको प्रत्येक आँख्लामा ३-३ ओटा चिल्ला ५-७ से.मी. लामा र ३-४ से.मी. चौडा भालाकारका पात हुन्छन् । फूलहरू भने झुप्पा झुप्पा हुने गरी फुल्छन् । यसको फूलको रङ हल्का सेतो र गुलाफी हुन्छ। चैत्रदेखि फुल्न शुरु गरी पौषसम्म फूल फुल्ने गर्छ । फलको आकार भने गोलाकार हुन्छ भने करिव ५.७ से.मी. व्यासको हुन्छ । काँचो अवस्थामा हरियो र पाकेपछि कालो रङको हुन्छ। काँचो अवस्थामा हरियो र पाकेपछि रातो कालो रङको हुन्छ । फल र बीउ चेप्टो गोलो हुन्छ । फलहरू जेठको अन्तिम हप्तादेखि पाक्न शुरु गर्छ । बीऊको रङ खैरो हुन्छ र बाहिरी भाग कडा खालको हुन्छ । जाडो याममा यो बिरुवा

सुषुप्तावस्थामा बस्दछ । वसन्त ऋतु शुरु हुनासाथ नयाँ पालुवा लाग्न शुरु हुन्छ । मानिसहरू यसलाई घर, आँगन र बगैंचाहरूमा शोभा बढाउन पनि लगाउने गर्दछन् ।

## रासायनिक विवरण :

सर्पगन्धामा करिव १ सयवटा Alcoloids पाइन्छन्। अल्काल्वाइड चिकित्साप्रणाली (एलोप्याथी) मा व्यापक प्रयोग हुन्छ । अल्काल्वाइडलाई ४ वर्गमा विभाजन गर्न सकिन्छ–

१. योहिम्बेन : रेसर्पिन (Reserpine) ०.१३%, रेसिनेमिन ०.०१५%, राहिम्बिन ०.०३१% ।

२. हिट्रोयोहिम्बेन : सरप्याटिनिन (सरप्याटिडिन ०.०१३%, सरप्याटिन ०.०८%, रौबिसिन अजमेलिसिन ०.०२%, न्यासरपिलिन तथा एल्सटोनिन आदि ।

३. सर्पेजिन : सर्पेजिन (रोपिन) ०.०२% ।

४. डाइहाइड्रोइणडोल (अजमेलेन) : अजमेलिन ०.०१% ।

## औषधीय गुण :

***छारे रोगमा :*** यस रोगमा १ ग्राम सर्पगन्धाको जराको चूर्णलाई दूधसँग मिसाएर दिनको ३ पटकसम्म दिनुपर्दछ । विरामीको रोग निको नभएसम्म यो औषधिको प्रयोग गरिएमा विस्तारै निको हुन्छ ।

***अनिद्राको उपचारमा :*** निद्रा नलाग्ने रोगीहरूका लागि सर्पगन्धा अति लाभदायक छ । यसको जराको चूर्ण ०.६ देखि ०.२५ ग्राममा कुनै सुगन्धित द्रव्य मिसाएर दिनाले धेरै प्रभावशाली हुन्छ । सुत्ने बेला यसको ०.२५ ग्राम पाउडरको सेवन घिउसँग गर्नाले अति फाइदा हुन्छ ।

***उच्च रक्तचापमा :*** उच्च रक्तचापका लागि सर्पगन्धा विश्वभरि नै सर्वोत्तम औषधि मानिन्छ । यसको उपयोगले उच्च रक्तचापमा उल्लेखनीय कमी आउँछ । रिसर्पिन र रिसेनोमिनले उच्च रक्तचापलाई कम गर्नुका साथै मानसिक विकार तथा चिन्ताग्रस्त अवस्थाका रोगीलाई शान्त राख्ने काम गर्दछ । पिनेको २०-३० जरालाई दिनमा दुई पटक प्रयोग गर्नुपर्छ ।

***उन्मादको उपचारमा :*** परम्परागत चिकित्सामा सर्पगन्धालाई पागलबुटी वा पागलपनको औषधिको रूपमा पनि लिइन्छ । भारतका केही प्रान्तहरू जस्तै विहार र यु. पि. मा यही नामबाट यसको बिक्री हुने गर्छ । खासगरी उन्माद र अपस्मारको अत्यधिक उत्तेजित अवस्थामा मनलाई शान्त गर्नको लागि यसको प्रयोग हुने गर्छ । यस रोगमा सर्पगन्धाको जराको पाउडर १ ग्राम २ सय पचास एम. एल. बाख्रीको दूध र मह वा गुडसँग मिसाएर दिनमा २ पटक खानाले फाइदा हुन्छ । यो खासगरी हृष्टपुष्ट र सामान्य रक्तचाप भएको व्यक्तिले मात्र प्रयोग गर्नुपर्छ ।

**रक्तवायुको उपचारमा :**

सर्पगन्धाको जराले चिलाउने र रक्तवायुको उपचारमा अहं भूमिका खेल्दछ । यसको लागि १ ग्राम जराको पाउडरलाई पानीसँग मिसाएर प्रयोग गर्नाले फाइदा गर्दछ । सर्पगन्धाको जरालाई पेष्टको रूपमा प्रयोग गरेमा र विष मार्ने औषधि (antidote) को रूपमा, विषालु सर्पदंष र कीराहरूको टोकाइमा प्रयोग गरेमा धेरै फाइदा गर्दछ । यो एकप्रकारको टनिक र मादक पदार्थ हो ।

***अन्य प्रयोजन :*** पेटको गडबडीमा, झाडा पखालामा, कृमिनाशकमा धेरै जसो प्रयोगमा आइरहेको मानसिक असन्तुलनमा जराको बोक्राको पेष्टी र महसँग २:१ मिश्रण दिनाले निकै फाइदा गर्छ । जरा र पातको क्वाथले उल्टी रोक्दछ र मरिचसँग (५:२) मिसाएर महामारी (cholera), गानो (colic) र ज्वरो आदिमा व्यापक प्रयोग भएको पाइन्छ ।

सर्पगन्धाको पातको रसले आँखामा परेको जालो (छायाँ/Opacity या comes) लाई हटाउँछ, स्नायु प्रणालीमा राम्रो काम गर्दछ । मूत्रनलीको संकोचन (contraction) लाई हटाउँछ र बच्चा जन्मने प्रक्रियामा निकै सहयोगी सावित भएको विवरण प्रकाशमा आइसकेको छ । अजमालिन र अजमलिनाइन वा अज्मालिसनको मुटुसम्बन्धी रोग निदानमा अत्यधिक प्रयोगमा आएको छ ।

उपरोक्त मुख्य वनस्पतिजन्य रसायनहरू एलोप्याथी र आयुर्वेदमा विभिन्न रोगहरूमा उपयोगी भएकोले हानिरहित प्राकृतिक औषधिको रूपमा प्रयोग भइरहेको छ ।

आधुनिक चिकित्सा प्रणालीमा यसको प्रयोगको व्यापकताको श्रेय डा. गणपत्त सेन र डा. कार्तिक चन्द्र बोसलाई जान्छ । त्यसैले विश्वको झुकाव जडिबुटी र गैर काष्ठ वन पैदावारतिर केन्द्रित भइरहेको बेला हाम्रो देशमा भएको अथाह जडिबुटी र वनस्पतिजन्य स्रोतहरूको व्यापक संचालन, दिगो व्यवस्थापन, खेती प्रसारणमा विभिन्न क्षेत्रबाट अथक प्रयास हुनुपर्ने र नेपाल सरकारबाट यस क्षेत्रको विकासमा संकल्प लिई अगाडि बढ्न सकेमा केही वर्षभित्रै विश्वको प्राकृतिक विविधताको क्षेत्रमा अमिट छाप दिन देशको गरीबी निवारणमा अतुलनीय योगदान पुग्ने कुरामा दुईमत हुन सक्दैन ।

*सन्दर्भग्रन्थ :*

*१. जडिबुटी परिचय माला*

*२. नेपालका जडिबुटी तथा गैरकाष्ठ वन पैदावारहरूको दीगो संकलन र खेती प्रविधि ।*

# ॐ जय लक्ष्मी माता ...

कमलासनमा विराजमान, मधुर मुस्कानबाट सुशोभित, चार भुजाहरुबाट युक्त, दुवै हातमा स्थित कमल पुष्पले अभयदान दिइरहनुभएकी आदि आदि विशेषणादिले विभूषित आफ्ना कटाक्षले भगवान् विष्णुलाई प्रसन्न गर्नुहुने भगवती महालक्ष्मीको आरती 'ॐ जय लक्ष्मी माता...' कार्यक्रमको करिव करिव समाप्तितिर भइरहेको थियो । यसभन्दा पहिले परमपूज्य सद्गुरुदेवहरु र भगवान् गणेशको पूजन सम्पन्न गरिएपछि महालक्ष्मीको पूजन गर्ने कार्यक्रम सम्पन्न भएको थियो ।

गत कार्तिक १९ गते लक्ष्मीपूजाको पावन अवसरमा सिद्धाश्रम शक्ति केन्द्रले उक्त कार्यक्रम सम्पन्न गरेको थियो । बसुन्धरास्थित आश्रम भवनमा सम्पन्न माता महालक्ष्मी पूजन कार्यक्रम बिहान ८ बजे शुभारम्भ भएको थियो । उक्त अवसरमा सावरपन्थी साधक रामजी अर्याल, गुरु सेवा दलका साधिका सारदा पुडासैनी र जयन्ती पुडासैनी ले पूजन गर्ने सौभाग्य पाउनुभएको थियो ।

आश्रमले पर्व विशेषमा विभिन्न देवीदेवताहरुको पूजनलगायतका कार्यक्रमहरु सम्पन्न गर्दै आउने क्रममा उक्त महालक्ष्मी पूजन सम्पन्न गरेको हो । विभिन्न धर्म, संस्कृतिका आ-आफ्ना महत्त्व, गरिमा र महिमा हुन्छन् र यी धर्म-संस्कृतिभित्र लुकेका आध्यात्मिक, धार्मिकलगायतका विभिन्न पक्षहरुलाई उजागर गर्ने क्रमलाई निरन्तता दिई संस्थाले विभिन्न चाडपर्वहरुका मौलिकतालाई अक्षुण्ण राखी तिनीहरुको संवर्द्धन, संरक्षण पनि गर्दै आइरहेको छ ।

धर्म संस्कृतिको बलियो जग मानिएको तिहारको आनन्द र रमाइलोमा अझै रौनक र भव्यता थप्न दीपावली मनाउनुका साथै माता महालक्ष्मीको भव्य तथा दिव्य तस्वीरलाई दर्शनार्थ आरती कक्षमा स्थापित गरी सजाइएको थियो ।

सिद्धाश्रम शक्ति केन्द्रका अधिराज्यभरिका सबै सम्पर्क कार्यालयहरुमा पनि उक्त दिन महालक्ष्मी पूजन भव्यरुपमा सम्पन्न भएका थिए ।

### द्यौसीभैलोको रमाइलो

धर्म, संस्कृतिको जगेर्ना र यसको मौलिकताको संरक्षण गर्दै सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक वर्ष तिहारको पावन अवसरमा द्यौसीभैलो कार्यक्रमलाई निरन्तरता दिँदै आइरहेको छ ।

यसै क्रममा संस्थाले गत कार्तिक १९ र २० गते साधक साधिकाका घरमा गएर नेपाली मात्रको मौलिक पहिचान बोकेको द्यौसीभैलो कार्यक्रम सम्पन्न गर्‍यो ।

परमपूज्य सद्गुरुदेवहरुको आरतीलगायत माता महालक्ष्मीको आरती र विभिन्न द्यौसी गायनका साथ सम्पन्न कार्यक्रमलाई सिद्धाश्रम शक्ति केन्द्र नेपालका विभिन्न सम्पर्क कार्यालहरुले पनि सम्पन्न गरेका थिए ।

लक्ष्मी पूजा र गोवर्द्धन पूजा गरी दुई दिनसम्म बिहान १० बजेदेखि नै विभिन्न साधक साधिकाहरुका घरलगायतमा गई द्यौसीभैलो खेलिएको थियो ।

आश्रम गतिविधि

## दिव्य गुरु महोत्सव

परमपूज्य सद्‌गुरूदेव डा. नारायणदत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजज्यू) धर्तीमा अवतरित हुनु भएको प्रत्येक अंग्रेजी महिनाको २१ तारीखको पुनीत अवसरमा सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिना दिव्य गुरू महोत्सवलाई मनाउँदै आइरहेको छ। यसै क्रममा गत कात्तिक ४ गते तदनुसार २१ नोभेम्बर, २०१० का दिन बसुन्धरा आश्रम परिसरमा उक्त कार्यक्रम सम्पन्न भयो ।

बिहान १०:१५ मा शुभारम्भ भएको कार्यक्रममा निखिल स्तवन, गोरक्ष स्तवनको सामुहिकरूपमा सस्वर पाठ, गुरु पादुका पूजन, गुरू मन्त्र जप, हवन, आवाहन भजन, आरतीको क्रम रहेका थिए ।

कार्यक्रममा सम्पन्न गुरु पूजनको सौभाग्य सावरपन्थी साधक रामजी अर्याल र साधिका सारदा पुडासैनीले प्राप्त गर्नुभएको थियो। आरतीपछि भजन कीर्तन, नृत्य, प्रवचन आदिका क्रमहरू रहेका थिए । प्रवचनको क्रममा सावरपन्थी साधक रामजी अर्यालले दीपावलीको शुभकामना दिनुहुँदै आत्माको घर शरीरको शुद्धिकरणको आवश्यकता बोध गर्नुभयो। उहाँले अन्तःकरणका खराबीहरू नहटेसम्म लक्ष्मी माताको दर्शन असम्भव रहेको बताउनु भयो। उहाँले गुरू तत्वलाई संकुचित रूपमा हेर्न नहुनेतर्फ औँल्याउनु हुँदै गुरूको नाम बेचेर फाइदा लिन खोज्नेहरूसँग सतर्क रहनु पर्ने बताउनु भयो ।

उक्त कार्यक्रममा सम्पर्क कार्यालय तीनकुने , बानेश्वरबाट भजन प्रस्तुत भएको थियो। पर्सा जिल्लाको बीरगंजमा रहेको आरती संचालन केन्द्रबाट आउनु भएका डोलराज रेग्मीले 'परौँ शरण गुरू गोरख निखिलको' बोलको भजन प्रस्तुत गर्नुभएको थियो ।

कार्यक्रममा नवरात्रि महोत्सवमा बढी खट्ने साधक बुद्धरत्न शाक्यलाई सावर पन्थी साधक रामजी अर्यालले गुरूदेवहरूको तस्वीर उपहार दिनु भएको थियो ।

## नवदुर्गा भवानीलगायतको श्रीमूर्तिको विसर्जन

सिद्धाश्रम शक्ति केन्द्रले परमपूज्य सद्‌गुरुदेहरुको कृपा, आशीर्वादस्वरुप नवरात्रि कार्यक्रमलाई विशेष रुपमा मनाउने क्रममा दर्शनार्थ राखिएको दुर्गा भवानीलगायतका मूर्तिहरुलाई कोजाग्रत पूर्णिमाका दिन विधिवत्‌रुपमा विसर्जन गऱ्यो ।

बिहान शुभ साइतमा गरिएको विसर्जन कार्यक्रममा साधक साधिकालगायत भक्तजनको उपस्थिति रहेको थियो ।

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रबाट हरेक महिना सञ्चालन हुँदै आइरहेका मासिक कार्यक्रमअन्तर्गत हवन कार्यक्रमहरु गत महिना निम्नानुसार सम्पन्न भए–

### केन्द्रीयरुपमा सम्पन्न हवन कार्यक्रमहरु

कात्तिक १ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, बिहान ८:००–९:०० बजे । कात्तिक २ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, बिहान ७:००–८:०० बजे । कात्तिक ३ गते बुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, बिहान ८:००–९:०० बजे। कात्तिक ४ गते बिहीबार– तान्त्रोक्त वगलामुखी हवन, वगलामुखी मन्दिर, पाटन, बिहान ८:००–९:०० बजे ।

### सम्पर्क कार्यालयहरुमा सम्पन्न मासिक हवन कार्यक्रमहरु

कात्तिक ३ गते बुधबार– तान्त्रोक्त विन्ध्यवासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, बिहान ८:००–९:०० बजे । कात्तिक ४ गते बिहीबार– तान्त्रोक्त वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, बिहान ८:००–९:०० बजे । कात्तिक २ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, बिहान ७:००–८:०० बजे । कात्तिक २ गते मंगलबार– तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, बिहान ७:००–८:०० बजे ।

## २०६७ मंसिर महिनामा पर्ने चाडपर्वहरू

| | |
|---|---|
| मंसिर १ गते | **तान्त्रोक्त महालक्ष्मी हवन,**<br>**तान्त्रोक्त विन्ध्यवासिनी हवन**<br>हरिबोधनी एकादशी, तुलसी विवाह |
| मंसिर २ गते | **तान्त्रोक्त बगलामुखी हवन,**<br>**तान्त्रोक्त महर्षि वेदव्यास हवन** |
| मंसिर ५ गते | **दिव्य गुरु महोत्सव**<br>गुरु नानक जयन्ती |
| मंसिर ६ गते | **श्री शिव गोरक्ष हवन** |
| मंसिर ७ गते | **तान्त्रोक्त वटुक भैरव हवन**<br>**तान्त्रोक्त गणपति हवन** |
| मंसिर १३ गते | गोरखकाली पूजा |
| मंसिर १५ गते | उत्पत्तिका एकादशी व्रत |
| मंसिर १८ गते | बाला चतुर्दशी, शतबीज रोपणम् |
| मंसिर २४ गते | विवाह पञ्चमी |
| मंसिर २७ गते | अष्टमीव्रत, गोरखकाली पूजा |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

मन्त्र तन्त्र यन्त्र विज्ञानसम्बन्धी
नेपालकै पहिलो रेडियो कार्यक्रम

## गोरक्ष निखिल सन्देश

gnsandesh@ssk.org.np

| स्थान | समय (बिहान) | स्टेशन | मेगाहर्ज |
|---|---|---|---|
| पोखरा | सोमबार ५:०५–५:४५ | माछापुच्छ्रे FM | ९१ |
| चितवन | सोमबार ५:००–५:४० | कालिका FM | ९५.२ |
| धनगढी | सोमबार ५:३०–६:०० | दिनेश FM | ९३.८ |
| सुर्खेत | शनिबार ५:१५–५:४५ | रेडियो भेरी FM | ९८.६ |
| गोरखा | सोमबार ५:००–५:३० | रेडियो गोरखा FM | ९२.८ |
| भैरहवा | बिहीबार ५:००–५:४५ | रूपन्देही FM | १०२ |
| दाङ घोराही | बिहीबार ५:३०–६:०० | रेडियो मध्यपश्चिम FM | ९१.४ |
| पाल्पा | बिहीबार ५:००–५:३० | रेडियो मुक्तिनाथ FM | ९०.८ |
| सिन्धुली | बिहीबार ५:००–५:३० | सिन्धुलीगढी FM | १०३.६ |
| दाङ लमही | शुक्रबार ५:३०–६:०० | रेडियो देउखुरी FM | १०५.८ |
| पोखरा | बिहीबार ५:३०–६:०० | रेडियो सराङ्कोट FM | १०४.६ |
| दमौली | बिहीबार ५:२५–५:५५ | दमौली FM | ९४.२ |
| कोहलपुर | बिहीबार ५:३०–६:०० | कोहलपुर FM | १००.२ |
| चितवन | सोमबार ५:००–५:४० | त्रिवेणी FM | १००.६ |
| दमौली | बुधबार ५:०५–५:३५ | मादीसेती FM | १०५.८ |
| दमौली | बुधबार ५:१०–५:३० | रेडियो तनहूँ FM | ९७.२ |

## २०६७ मंसिर महिनाका शुभ समयहरू

**मंसिर ५, १२, १९ र २६ गते (आइतवार)**
श्रेष्ठ– दिन ७:३६–१०:००, १२:२४–२:४८
रात्रि ७:३६–९:१२,११:३६–२:००

**मंसिर ६, १३, २० र २७ गते (सोमवार)**
सर्वश्रेष्ठ– दिन ९:१२–१०:४८, ३:३६–६:००
श्रेष्ठ– दिन ६:००–९:१२, १:१२–३:३६
रात्रि ८:२४–११:३६, २:००–३:३६

**मंसिर ७, १४, २१ र २८ गते (मंगलवार)**
सर्वश्रेष्ठ– दिन १२:२४–२:४८
श्रेष्ठ– दिन ६:००–७:३६,१०:००–१०:४८
रात्रि ८:२४–११:३६,२:००–३:३६

**मंसिर १, ८, १५, २२ र २९ गते (बुधवार)**
सर्वश्रेष्ठ– दिन ६:४८–८:२४
श्रेष्ठ– दिन ८:२४–११:३६
रात्रि ६:४८–१०:४८, २:००–४:२४

**मंसिर २, ९, १६ र २३ गते (बिहीवार)**
सर्वश्रेष्ठ– दिन ५:१२–६:००
श्रेष्ठ– दिन ६:००–६:४८,१०:४८–१२:२४,३:१२–५:१२
रात्रि १०:००–१२:२४

**मंसिर ३, १०, १७ र २४ गते (शुक्रवार)**
सर्वश्रेष्ठ– दिन ४:२४–६:००
रात्रि १:१२–२:००
श्रेष्ठ– दिन ९:१२–१०:२४,२:००–४:२४
रात्रि ८:२४–१०:४८

**मंसिर ४, ११, १८ र २५ गते (शनिवार)**
सर्वश्रेष्ठ– दिन ५:१२–६:००
श्रेष्ठ– दिन १०:४८–२:००
रात्रि ८:२४–१०:४८,१२:२४–२:४८,४:२४–६:००

**नोट:**
दिन-भन्नाले बिहान ६:०० देखि साँझ ६:०० सम्म
रात्रि-भन्नाले साँझ ६:०० देखि अर्को बिहान ६:०० सम्म

*परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूद्वारा रचित 'ज्योतिष और काल निर्णय' ग्रन्थमा आधारित ।*

*यस अंकमा नाथका विषयमा हामीले धेरथोर पढ्ने अवसर पायौँ । यसबाट नाथको विषयमा केही मात्रामा भए पनि जानकारी प्राप्त भयो । तर नाथको विषयमा यो जानकारी भनको त समुद्रबाट झिकिएको एक थोपा पानी सरी हो । नाथबारे साङ्गपाङ्गो विवेचना साध्य छ छैन, यो बेग्लै कुरा हो तर यसको गरिमा, महिमा, विशिष्टतालाई भने हामीमध्ये धेरैले आत्मसात् गरेकै हुनुपर्छ ।*

*नाथको विषयमा केलाउँदा आदिनाथका पनि ज्योतिस्वरुप श्री श्री महायोगी गुरु गोरखनाथको प्रसङ्गलाई कहिल्यै पनि छोड्न सकिन्न किनकि नाथ पन्थका सर्जक र यस पन्थका अग्रदूत स्वयं श्री श्री महायोगी गुरु गोरखनाथ हुनुहुन्छ । श्री श्री महायोगी गुरु गोरखनाथले आफू स्वयं साक्षात् अलख निरंजन परमेश्वर भएर पनि पृथ्वीलाई गुरु विहीन हुनबाट जोगाउन मत्स्येन्द्रनाथलाई गुरु बनाई गुरु-शिष्य परम्परालाई जीवन्तता दिनुभयो । मत्स्येन्द्रनाथका शिष्य बनेर कठोररुपमा शिष्यधर्मको नमूना प्रस्तुत गर्ने पहिलो श्रेय पनि श्री श्री महायोगी गुरु गोरखनाथलाई नै जान्छ । शिष्यधर्मलाई अङ्गाल्दै उहाँले गर्नुभएका कार्यहरु आजसम्म पनि सबैका लागि अनुकरणीय बनेका छन् ।*

*तर विडम्बना यो छ कि गुरु गोरखनाथका शिष्य हौँ भन्ने धेरैले शिष्यधर्मलाई निभाउन सकेका छन् कि छैनन्, गुरु गोरखनाथको मार्गलाई पछ्याउने हामीहरु कठोर अनुशासन, मर्यादा, शुद्ध आरचण, निर्मल हृदय, आत्मीक भाव, कर्तव्यबोधको स्थितिमा छौँ कि छैनौँ भनेर चिन्तन गर्ने बेला आइसकेको छ । नाथ पन्थको चिनारीलाई जिउमा सजाएर मात्र पनि केही हुने होइन । भित्रैदेखि शिष्यत्व ग्रहण भयो कि भएन ? भित्रै देखि हामीमा कल्मष हट्यो कि हटेन वा भित्रैदेखि परिवर्तनको प्रकाश फुट्यो कि फुटेन भन्ने ठूलो कुरा हो । हामीमा भित्रैदेखि आएको कठोर अनुशासनको पालन, आन्तरिक विशुद्धि, आत्मीक मर्यादा, गुरुप्रतिको वफादारिता, उचित खानपान, उचित रहनसहन, कर्तव्यबोध नै वास्तविक रुपमा शिष्यत्व हो । यी सद्गुणहरुको अभावमा बाहिरी रुपमा नाथहरुले धारण गर्ने वस्तुहरु जतिसुकै धारण गरौँ, यसबाट फाइदाभन्दा बढी हानि नै देखिन्छ । शुद्ध आरचण बिना यी वस्तुहरुको उपयोगबाट गुरु गोरखनाथकै पनि कता कता हामीले बदनाम गरिरहेका हुनेछौँ । आफूलाई मर्यादामा राख्न सकेनौँ, आफूलाई कठोर अनुशासनमा राख्न सकेनौँ, सन्मार्गमा हिँडाउन सकेनौँ, व्यर्थका प्रलापहरुलाई मात्र प्रश्रय दियौँ, जीवनमा कुनै पनि मर्यादाको पालन हुन सकेन भने नाथले लाउने कुरा लाउँदैमा, नाथले उपयोग गर्ने वस्तुको उपयोग र उपभोग गर्दैमा मात्रै केही हुने होइन । त्यसैले पहिले त आचरण सुधार्नु पर्छ । शुद्ध आचरण, व्यवहारादिले नै नाथ चिनिने हुन् । आत्मीक भाव, वैराग्य, करुणा, अहिंसा, स्नेह, प्रेम, शुद्ध लेनदेन, शान्तिजस्ता सद्गुणहरुलाई धारण गरी नाथ पन्थका अनुयायी हुनुको गौरव हासिल गर्नुछ । नाथ पन्थ नै विश्वको सर्वोत्कष्ट मार्ग हो भन्ने सत्यतालाई आफ्नो आचराणादिबाट फेरि एकपटक सन्देश दिनुछ । फेरि एकपटक विशुद्ध नाथ बनेर देखाउनु छ । आउनुहोस्, हामी सबै शिष्य, भक्त, उपासक, आराधक, अनुयायीहरु मिलेर नाथ मार्ग, नाथ पन्थलाई फेरि विश्वभरि फैलाऔँ, फेरि यसको यशोगान गाऔँ ।*

*अस्तु ।*

१-४: तिहारमा सम्पन्न लक्ष्मी पूजन।

५-१५: तिहारमा विभिन्न स्थानमा खेलिएका देउसीभैलो कार्यक्रम।